वर्ष १०, अङ्क १०, पूर्णाङ्क १००, असार २०७६



# Agnichakra National Monthly

# अग्निचक्र



सतगुरू गोरखनाथ बाबा

ISSN 2362-1109



www.agnichakranews.com राष्ट्रिय मासिक














# अग्निचक्रको यात्रा निरन्तर जारी छ

# लोकसेवा आयोगको प्रतिबद्धता

# योग्यता, स्वच्छता र निष्पक्षता ।




नेपाल सरकार

**सञ्चार तथा सूचना प्रविधि मन्त्रालय**

**सूचना तथा प्रसारण विभाग**

## सम्पादकीय

# सय अंक पुग्यो : साथ–सहयोगका लागि सम्पूर्णमा धन्यवाद !

आजभन्दा झण्डै १० वर्ष अगाडिबाट अर्थात् २०६६ असोज देखि २०६७ बैशाखसम्म ८ महिना लगातार ८ अंक ‘लभश्री राष्ट्रिय मासिक’ प्रकाशित गर्न सफल भएपछि नाम फेर्ने सल्लाह भएर २०६७ जेठ अंक देखि ‘अग्निचक्र राष्ट्रिय मासिक’ नाम राखेर आजसम्म निरन्तर प्रकाशित हुँदै आएको यो ‘अग्निचक्र’ हेर्दा हेर्दै सय अंकसम्म आइपुगेको छ । एक वर्ष अर्थात् बाह्र महिनामा १० अंक हरेक वर्ष प्रकाशित हुँदै आएको छ । सोही अनुसार ०६६ देखि सुरु भएको ०७६ असारसम्म आइपुग्दा सय महिना लामो कालखण्डसम्म सय अंक पुऱ्याउँन साथसहयोग गर्नु हुने विद्वान् लेखक, जिज्ञासु पाठकवर्ग, शुभ चिन्तकहरु र विज्ञापनदाता सम्पूर्णमा हार्दिक आभार तथा धन्यवाद ज्ञापन गर्दछौं ।

अहिलेसम्मको यात्रामा सबै पक्षबाट गर्नु भएको साथसहयोग र विश्वासकै कारण हामीले सय पूर्णाङ्कसम्म सफलतापूर्वक प्रकाशन गर्न सकेका हौँ र भविष्यमा पनि यस्तै साथसहयोग मिलिरहने आशा लिएका छौँ । सयौँ अंकसम्म आइपुग्दा हामीले थोरै गर्व र धेरै जिम्मेवारीको महसुस गरेका छौँ । स्थापनाकालदेखि आजसम्म र भोलिका दिनमा पनि अग्निचक्र कुनै व्यक्ति, संघ–संस्था अथवा कुनै धर्म–सम्प्रदायको मुखपत्र होइन, हुने छैन र हुँदैन पनि । अग्निचक्र सबैको हो त्यसैले सबैखाले सामाग्रीहरु हामीले प्रकाशन गरिरहेका छौँ अर्थात् हाम्रा प्रकाशन सामाग्रीहरु सम्पूर्णका निम्ति हितकारी भइरहेका छन् ।

हामी नेपाली हौँ, हामीमा राष्ट्रवाद छ र राष्ट्रलाई पनि उठाउनु पर्छ । समृद्ध नेपाल : सुखी नेपालीको नारालाई साकार पार्न अग्निचक्र पनि लागि परेको छ । नेपाल र नेपालीपन बचाउन तथा आम नागरिकलाई सत्मार्गमा लाग्न प्रेरणा दिने नेपाली भाषा–साहित्यको श्रीवृद्धिका लागि सबै क्षेत्रलाई समेटेर सर्वे भवन्तु सुखिनः सर्वे सन्तु निरामया भन्ने मूल आदर्शलाई आत्मसाथ गर्दै अग्निचक्रले सबैलाई आत्मसन्तुष्टि प्रदान गर्ने ज्ञानका खुराकहरु प्रकाशन गर्दै जानेछ भन्ने विश्वास व्यक्त गर्दछौँ । ॥ जय गोरख – जय नेपाल ॥


का.जि.प्र. द.नं. ३२/०६६/६७
स्थायी लेखा नं. (PAN): ३०३८२५१२२ ISSN: 2362-1109

| सम्पादक/प्रकाशक | चिफ एडभाइजर | निर्देशक |
|---|---|---|
| लक्ष्मीनारायण भट्टराई | दुर्गाप्रसाद आचार्य | गोपाल घिमिरे |


अग्निचक्र राष्ट्रिय मासिक
www.agnichakranews.com

वर्ष १० अङ्क १० पूर्णाङ्क १०० असार २०७६

संरक्षक : प्रभा राज्यलक्ष्मी राणा
ठेगाना : का.म.न.पा.-३, सम्पर्क कार्यालय : बागबजार, काठमाडौं ।
फोन : ०१-४३७७७१०, ९८५१०४०३३०
email : agnichakramasik@gmail.com

By the Grace of God
Edited & Published by:
Laxmi Narayan Bhattarai
Mob. : 9841308834

**सल्लाहकार**
प्रा.डा. करबीरनाथ योगी
डा. पदमराज पन्त
डा. कमल शर्मा लम्साल
डा. घनश्याम खतिवडा
विनयकुमार शर्मा नेपाल
प्रेमसागर पौडेल
आर.एच. दाहाल
रोशन श्रेष्ठ
पुण्य आचार्य

**व्यवस्थापक**
कमला मिश्र

**कानुनी सल्लाहकार**
अधिवक्ता लक्ष्मण आचार्य

**संवाददाता/सहयोगी**
के.एम. भट्टराई/वशिष्ठ भलना

**फोटोग्राफर**
अग्निप्रसाद निरौला

**प्रमुख वितरक**
यज्ञ न्यौपाने (उपत्यका)
एन.ए. डिस्ट्रिब्युटर्स (उपत्यका बाहिर)

**कम्प्युटर**
दिनेश भट्टराई, ९८४१३५१३०७

**मुद्रण**
एस.पी. प्रेस, कामनपा- ३१




# ॐ सत्गुरु वन्दना

गोरक्ष वालम् गुरुशिष्य पालम् ।
शेषः हिमालम् शशीखण्ड भालम् ॥
कालष्य कालम् जितजन्म जालम् ।
वन्दे जटालम् जगदाव जालम् ॥









## लुइटेलसँगको संवादबाट प्राप्त ज्ञान

म अग्निचक्र राष्ट्रिय मासिकको नियमित पाठक हुँ । प्रायः सबै अंकहरू पढेको छु र सुरक्षित पनि राखेको छु । मलाई धेरै पटक नयाँ नयाँ ज्ञानका कुराहरू अग्निचक्रले सिकाउदै आएको छ । ९८ औं यात्रासम्म आइपुग्दा निस्केका अग्निचक्रका ज्ञानहरू मैले आभाष गरिसकेको छु । मैले धेरै नै ज्ञानको भण्डार अग्निचक्रमार्फत पाएको छु । गीताका अठार वटै अध्यायहरू नियमित रूपमा अग्निचक्रमा पढ्न पाएको थिएँ । त्यसपछि लगातार उपनिषत् पनि पढ्दै आइरहेको छु । विभिन्न अध्यात्मिक गुरू-महाराजहरूसँगको अन्तर्वार्ता पनि पढ्न पाएर मख्ख पर्ने गरेको एक जिज्ञासु मानव हुँ म । मैले आज कलम किन चालउँदैछु भने ९९औं पूर्णाङ्कमा प्रकाशित पूर्वीय वाङ्मयका अध्येता तथा समाजसेवी तिलकप्रसाद लुइटेलसँग अग्निचक्रले गरेको कुराकानी बहुत ऐतिहासिक लाग्यो । चारवटै वेदको अनुवाद, भागवतपुराणको अनुवाद लगायत थुप्रै पुस्तक लेखेर नेपाली समाजलाई मनग्य गुन लगाउनु भएका लुइटेलज्यूको कुराकानी सुनेर त्यो संवादबाट मैले अझै धेरै ज्ञान प्राप्त गर्न सकेको हुँदा लुइटेलज्यू र अग्निचक्र दुवैजनालाई धन्यवाद दिन यो पाठकपत्र लेखेको हुँ । जयहोस् तिलक लुइटेल र अग्निचक्र मासिकको । जय नेपाल ॥

*कुमार वाङ्देन, ओखरपौवा ।*

## ढुंगो खोज्दा देवता भेटें झैं भो

म एक किसान हुँ । बिहान उठेदेखि राती १० बजेसम्म म प्रायः व्यस्त हुन्छु कृषि कार्यमा । ६ वर्षसम्म मलेसियाको जोहरभाहरू भन्ने ठाउँमा गार्मेन्टमा काम गरेर आफ्नो देश नेपाल फर्किएर आफ्नै गाउँमा जीवन भोग्दै आएको एक सक्रिय युवा कृषक भएको छु । म खानेकुरामा सचेत छु तर पनि मलाई टाउको दुख्न थालेको थियो । झण्डै ९ महिना भएको थियो । अब चाहिं डाक्टर कहाँ जानु पर्ला ! कहाँ पो जाऊँ भन्ने सोचेको बेलामा अग्निचक्र राष्ट्रिय मासिकको जेठ २०७६ अंक पढ्न पाएँ । त्यसमा पेज नं. ६ र ७ मा 'माइग्रेनबारे संक्षिप्त जानकारी' शिर्षकमा स्वास्थ्य जानकारी छापिएको रहेछ । टाउको दुख्नु, माइग्रेन के हो ? र यो कसरी हुन्छ ? लगायत यससँग सम्बन्धित कुराहरूबारे पूर्ण जानकारी पढ्न पाएँ । अब मलाई सजिलो भयो । मलाई के भएको हो र अब कहाँ जानु पर्छ भन्ने कुरा थाहा पाएँ । धन्यवाद अग्निचक्र ! ढुंगो खोज्दा देवता पाएँझैं भो मलाई ।

*- श्रीकृष्ण दास, काभ्रे, बनेपा ।*



## अग्निचक्रलाई १०० औं अंकको शुभकामना

**हाम्रो संस्कृति सभ्यता अनि कला साहित्यको मन्थन**
**हाम्रो जीवन धर्म-दर्शनसँगै अध्यात्मको चिन्तन**
**गर्दै वाङ्मयको सुसार यसरी आईरहोस् यो सधैं**
**त्यस्तै गौरवपूर्ण गोरखकृपा पाईरहोस् यो सधैं ।**

**- राधेश्याम भट्टराई**



प्रधानमन्त्री

काठमाडौं, नेपाल

## शुभकामना

अग्निचक्र राष्ट्रिय मासिक प्रकाशनको दश बर्ष पुगेको अवसरमा विशेषांक प्रकाशन हुन लागेको खबर पाउँदा मलाई खुशी लागेको छ। यस अवसरमा यस पत्रिकाका सम्पादक,सञ्चारकर्मी लगायत यस संस्थामा आवद्ध सम्पूर्ण कर्मचारी र पाठक सबैमा उत्तरोत्तर प्रगतिको हार्दिक शुभकामना व्यक्त गर्दछु ।

यस पत्रिकाले नेपाली साहित्य, राजनीति, अध्यात्म-धर्म-संस्कृति, ऐतिहासिक, पूरातात्विक, पर्यटन, स्वास्थ्य तथा सामाजिक विकास, जनचेतना अभिवृद्धि गर्नका लागि पत्रकारिताको तर्फबाट पुऱ्याएको योगदानका लागि भविष्यमा निरन्तरता दिनेछ भन्ने मैले विस्वास गरेको छु ।

अहिले सुचना र प्रविधिको समय हो । त्यस कारण पाठकहरुले कुनै पनि जानकारी लिनका लागि लामो समय प्रतिक्षा गर्न सक्दैनन् । त्यसैले यस पत्रिकाले पनि आफूलाई अनलाईन संस्करणमा रुपान्तरण गरेर विश्वभरीका पाठक समक्ष आफ्नो पहुँच स्थापित गर्नु उपयुक्त हुने मेरो सुझाव छ ।

१० असार, २०७६

केपी शर्मा ओली






**नेपाल सरकार**
**मा. गोकुल प्रसाद बाँस्कोटा**
**मन्त्री**
**सञ्चार तथा सूचना प्रविधि मन्त्रालय**
**सिंहदरबार, काठमाडौं**

# शुभकामना

नेपाली पत्रकारिताको क्षेत्रमा विगत दश वर्षदेखि क्रियाशील यस अग्निचक्र राष्ट्रिय मासिकले आफ्नो १०० औं अंक प्रकाशन गर्न लागेको थाहा पाउँदा साह्रै खुसी लागेको छ ।

सूचना प्रविधिमा भएको विकाससँगै आम संचारको क्षेत्रमा प्रकाशन र प्रशारणको वृद्धि भई रहेको अवस्थामा नेपाली प्रेसको श्रीवृद्धिको लागि प्रेस स्वयंले जनउत्तरदायी, जिम्मेवार र सही सूचना सम्प्रेषण गर्नु आजको मूख्य विषय हो । वर्तमान सरकार प्रेस स्वतन्त्रता प्रति प्रतिवद्ध छ । प्रेस स्वतन्त्रतालाई संविधानले सुनिश्चितता गरेको अवस्थामा यसको सुनिश्चितताको लागि पत्रकारिता क्षेत्रलाई व्यवस्थित, मर्यादित एवम् जनउत्तरदायी बनाउने दिशामा सरकार प्रतिवद्ध छ । देश सम्बृद्धिको यात्रामा छ र प्रेसले सोही दिशामा भूमिका खेलोस भने हार्दिक शुभेच्छा ।

अन्त्यमा, अग्निचक्र राष्ट्रिय मासिकले निश्पक्ष पत्रकारिता र पाठकको चाहना बुझेर उत्तरदायी भई समाजमा सही सूचना सम्प्रेषण गर्दै प्रेसको विश्वव्यापी मान्यतालाई सदैव आत्मसाथ गर्न सकोस् भन्ने शुभकामना व्यक्त गर्दछु ।

धन्यवाद !

मिति २०७६।०३।०३

गोकुल प्रसाद बाँस्कोटा
मन्त्री
**मा. गोकुल प्रसाद बाँस्कोटा**
**मन्त्री**

**फोन नं. :** ९७७-१-४२११५५५, ४२११७०१, ४२११६४०, **(कार्यालय) फ्याक्स :** ९७७-१- ४२११६००



# नेपाल पत्रकार महासंघ
# Federation of Nepali Journalists (FNJ)

केन्द्रीय समिति, सञ्चारग्राम, काठमाडौं, नेपाल

Ref No. :

मिति : २०७६।०३।०६

## शुभकामना

काठमाडौंबाट प्रकाशित अग्निचक्र मासिक सयौं अंकको प्रकाशनमा प्रवेश गरेको खवर थाहा पाउँदा अत्यन्त खुसी लागेको छ । यस अवसरमा पत्रिकाको सम्पादकीय र व्यवस्थापकीय परिवारमा हार्दिक बधाई दिन चाहन्छु ।

नेपाली पत्रकारिता क्षेत्रले अहिले पनि विविध चुनौती र अवरोधहरू भेलिरहेको छ । यस बाबजुद अग्निचक्र मासिकले नेपाली साहित्य, राजनीति, स्वास्थ्य, अध्यात्म र धार्मिक एवं नैतिक ज्ञानलगायतका सामग्रीहरु पस्केर व्यावसायिक पत्रकारिताको अभ्यासमार्फत नागरिकको सूचनाको अधिकारको रक्षा गर्दै समाज रुपान्तरणको दिशामा जिम्मेवार भूमिका निर्वाह गरेको पाइनु प्रशंसनीय काम हो ।

आगामी दिनमा पनि समाजप्रति जिम्मेवार र उत्तरदायी पत्रकारितामार्फत यो मासिकले आफ्नो उद्देश्यअनुरुपको सफलता प्राप्त गरोस् भनी शुभकामना व्यक्त गर्दछु ।

गोविन्द आचार्य
अध्यक्ष

Headquarters, Media Village, Kathmandu, Nepal



# प्रेस काउन्सिल नेपाल

(.......................... शाखा)





सञ्चारग्राम, तिलगङ्गा, काठमाडौं


प.सं. १५८८/०७५/०७६
च.नं.

मिति :२०७६/०३/०१

श्री लक्ष्मीनारायण भट्टराई,
सम्पादक/प्रकाशक, अग्निचक्र राष्ट्रिय मासिक ।

विषय : शुभकामना सन्देश ।

तपाइँको सम्पादनमा राजधानीबाट प्रकाशित हुँदै आएको **"अग्निचक्र"** राष्ट्रिय मासिकले सफलतापूर्वक ९९ अंक पूरा गरी १०० अंक प्रकाशन हुन लागेको अवसरमा अग्निचक्र टीमलाई हार्दिक बधाई दिन चाहन्छु । निरन्तर एक दशकको यात्रा निश्चय नै चुनौतीपूर्ण र कठिन रह्यो होला ।

छापाअन्तर्गतको म्यागेजिन साइजमा प्रकाशित यस मासिकमार्फत बहुलजाति, भाषा, धर्म, संस्कृति, स्वास्थ्य, राजनीतिक, समसामयिक जानकारी, प्राकृतिक, धार्मिक, शैक्षिक, मनोरञ्जन, पर्यावरणको संरक्षण र विकास निर्माणमा देखिएका ढिलासुस्ती, सार्वजनिक सेवाप्रवाहमा देखिएका विकृति-बिसंगतिसम्वन्धी विविध विषयमा खोजमूलक सामग्रीको प्रकाशनमा निरन्तरता रहोस् भन्ने शुभेच्छा प्रकट गर्दछु ।

पत्रकारिताको आधारभूत सिद्धान्त, पत्रकार आचारसंहिताको मर्मबमोजिम सत्यतथ्य, वस्तुनिष्ठ, सन्तुलन कायम राख्दै मर्यादित र जिम्मेवार अभ्यासको निरन्तरताको लागि हार्दिक शुभकामना व्यक्त गर्दछु ।

**किशोर श्रेष्ठ**
कार्यवाहक अध्यक्ष
प्रेस काउन्सिल नेपाल





पो.ब.नं. ३०७७, फोन नं. ४११२६७८, ४११२७९९, फ्याक्स नं. ४११२६९४
Website: presscouncilnepal.org, इमेल: prescoun_mdf@wlink.com.np, Audio Notice Board No.: 1618014112678



नेपाल सरकार
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय
**सूचना तथा प्रसारण विभाग**
(प्रशासन तथा प्रेस शाखा)

फोन: ४११२७१७
४११२५५१
४११२७५३
४४११८१६
फ्याक्स : ४११२६५२

पत्रसंख्या :-२०७५/७६

च.नं.:-




मिति २०७६/०३/०३ गते

## शुभकामना सन्देश

**अग्निचक्र राष्ट्रिय मासिक**ले आफ्नो पत्रकारिताको ९९औं अंक पूरा गरी सयौं अंक प्रकाशन गर्न लागेकोमा मलाई अत्यन्त खुशी लागेको छ । पत्रकारिता क्षेत्रका विविध विषय समेटि पाठकसामु एक अलग्गै पहिचान बनाउन सफल भएकोमा म अग्निचक्र राष्ट्रिय मासिक पत्रिकालाई धन्यवाद ज्ञापन गर्दछु र यो विषयलाई पत्रिकाले आगामी दिनमा निरन्तरता दिन सकोस् भनी शुभकामना व्यक्त गर्दछु । निष्पक्षता, मर्यादित र तथ्यमा आधारित समाचार प्रवाह आधुनिक पत्रकारिताका प्राण हुन् र यसलाई आत्मसात गर्दै अघि बढ्न सकेमा पत्रकारिताप्रति जनताको विश्वास बढ्न जाने भै पत्रकारिता पेसा दिगो र भरपर्दो हुन सक्छ भन्ने मलाई लाग्दछ ।

पत्रकारिता क्षेत्र एकदमै प्रतिष्पर्धी रुपमा अघि बढिरहेको कुरा हामी सबैलाई ज्ञात भएकै कुरा हो । बढ्दो भू-मण्डलीकरण; इन्टरनेटको प्रयोग र अनलाइन मिडियाको बढ्दो प्रवेशसँगै विशेष गरी प्रिन्ट मिडियालाई आफ्नो निरन्तरताको लागि थप मेहनत गर्नुपर्ने अवस्था भएको छ । अतः यस कुरालाई ध्यान दिई अरुले नसमेटेका समाचारहरुको खोजी गरी नयाँ शैलीमा अलग्गै किसिमबाट रिपोर्टिङ्ग गर्ने र बढीभन्दा बढी पाठक समक्ष पुग्ने विधिहरु अपनाउने र विज्ञापनदाताहरुलाई आफूप्रति आकर्षित गर्न सक्नु पर्ने देखिन्छ । समयको प्रवाहसँगै आफूलाई सामर्थ्यवान बनाउन सक्नु आवश्यक छ । अग्निचक्र राष्ट्रिय मासिकले यी कुरालाई ध्यान दिई आगामी दिनमा अघि बढ्न सकोस् भनी शुभ-कामना व्यक्त गर्दछु ।

धन्यवाद ।

**(कृष्ण मुरारी न्यौपाने)**
महानिर्देशक
सूचना तथा प्रसारण विभाग

**अन्तरवार्ता**



# नेपाली साहित्य पढ्ने गरौँ, सबै ज्ञानी भएपछि देश पनि बन्छ :

## राष्ट्रकवि माधवप्रसाद घिमिरे

*गणतन्त्रको विरोध गरेको होइन तर मलाई प्रजातन्त्र मनपर्छ । मलाई स्वतन्त्रता मन पर्छ । मेरो आफ्नै अलग अस्तित्व छ, कविको अलग्गै अस्तित्व हुन्छ, अलग्गै चिन्तन छ मेरो र पो अहिलेसम्म सयवर्षसम्म बाँचेको छु भन्नु हुने राष्ट्रकवि घिमिरेसँग अग्निचक्रले गरेको कुराकानीको सम्पादित अंश यहाँ प्रस्तुत गरिएको छ :*

**साहित्यमा लाग्ने प्रेरणा कोबाट पाउनु भएको थियो ?**

पहिलो प्रेरणा लेखनाथजीको कविताबाट हो तर वास्तवमै भनुँभने म गाउँमा हुर्केको मान्छे प्रकृतिबाट प्रेरणा प्राप्त गरेको हुँ । प्रकृतिकै देन हो । यहाँ काठमाडौंमा कोलाहलबाहेक केही सुनिदैन तर पहाडमा जानु भो भने खोलानाला सुसाएको नदिनाला बगेको हेर्दाहेर्दै प्रकृति मुसुक्क हासिरहेको देखिन्छ । लोकगीत गाउँदै उकाली हिडेको देखिन्छ । यसको ख्याल चाहिँ अलि पछि भयो तर सुरूमा चाहिँ लेखनाथजीकै कविताले प्रेरणा दिएको थियो मलाई ।

**कवि को हो र कविता के हो ?**

फूललाई एउटा वनस्पति मात्रै नदेख्ने, सौन्दर्य देख्ने, आकृति देख्ने, बहुत सुन्दर आकृति हेरिरहुँ जस्तो, सौन्दर्यको आँखाले हेर्ने र सिर्जना रचना गर्ने इश्वरको हाँसो देख्ने अर्थात् प्रकृतिका हरेक वस्तुलाई इश्वरको हाँसो झैँ देखेर रचना सिर्जना गर्ने मान्छे नै कवि हो । बच्चा हाँसेको, हिमाल झुल्केको, सूर्यनारायण उदाएको, चन्द्रमाले शितलता दिएको, हावा चलेको, पानी परेको, प्रेम गरेको, माया गरेको, समय व्यतित हुँदै गर्दा आएको आनन्द यी यस्ता बेलामा मनले रचना जो फुराउछ त्यही कविता हो ।

साधना गर्ने हो भने जो मान्छेले पनि भगवान् भेट्न सक्छ, आफै पनि भगवान् कै अंश हुँ भन्ने बुझ्छ । मनमा सिर्जित कुरालाई सिंगारेर बाहिर ल्याइने चिज नै कविता हो-गीत हो र गजल पनि हो साथै जे जे ले हृदय छुन्छ, ती सबै कविता-गीत-गजल हुन् । अनुभव चाहिँ हुन्छ, भन्न गाह्रो कविताहरूका परिभाषा । राम्रो लाग्छ मलाई त हिउँचुली... । यो कविता हो ।

**कविता फाँट नै किन रोज्नु भो ? र तपाईलाई को-को कवि मनपर्छ ?**

मुरली बजाएको सुनेपछि, मिठो गीत गाएको सुनेपछि, मिठो कविता वाचन गरेको सुनेपछि मलाई पनि त्यसै गरूँ जस्तो लाग्थ्यो । लेख्दै गयो- प्रकृतिको प्रेममा परियो, महसुस गरियो- बोध भयो अनि कवि पो भइएछ । राष्ट्रकवि बनिएला भनेर कवि बनेको हुइँन म । म प्रकृति प्रेमी हुँ । भगवान्को इच्छा होला मलाई कवि बनाउनु पनि । एउटा युगले सुन्दर मन्दीर दिन्छ, अर्को युगले कविहरू जन्माउछ, अर्को युगले भगवान्का अवतारहरू जन्माउछ । यस्तै केहि भएर नै म पनि कवि भएको हो रे । मेरा समर्थकहरूले भनेका कुरा हुन् है यी कुराहरू । नेपालीको लक्ष्मीप्रसाद, बंगालीको रविन्द्रनाथ र संस्कृतको कालीदास के हुन् त ! युगले जन्माएका सन्तती हुन् । मलाई यीनै तीन जना मनपर्छ ।

**भगवान् चाहिँ को मन पर्छ ? ३३ करोड छन् नि त !**

सृष्टिलाई ब्याउने जो हो उही मन पर्छ । भन्नाले के हो भने सुपर नेचुरल पावर नै हो है । सृष्टिमा यति धेरै चिजबिज छन् । दिउँसो रंगीचंगी दुनियाँ देखिन्छ र राती आकाशमा हेर्नु भो भने ताराहरू रंगीचंगी माथिको दुनियाँ देखिन्छ । यो सबै सञ्चालन गर्ने प्रकृति हो, हो त्यही मन पर्छ मलाई, बुझ्नु भो त ! सबैमा सिर्जना छ, नियममा चलेको छ । असारमा फुल्ने फूल अर्को वर्ष पनि असारमै फुल्छ । परमात्मा नै सृष्टि हो र सृष्टि नै परमात्मा हो ।

**मान्छेको जीवन के हो भन्ने लाग्छ ?**

जाने देखि भगवान्को वरदान, नजाने अभिषाप । जीवन बाँच्नु नै ठूलो भाग्य हो । तपाई कवि, डाक्टर, महात्मा, वैज्ञानिक र भगवान् पनि बन्न सक्ने ताकत भगवान्ले दिएका छन् । यसलाई सदुपयोग गरियो भने यहीँ स्वर्ग छ । बाँच्न जाने स्वर्ग यही छ, नत्र दुर्गति वा नर्क यहीँ छ ।

**मुक्ति कसरी पाइएला ! तपाईलाई के लाग्छ ?**

भोग गरिरहेता पनि लिप्त नहुने हो भने मोक्ष वा मुक्ति पाइन्छ । वासनामा फस्नु हुँदैन । मेरो देश, मेरा छोराछोरी, मेरो सम्पत्ति सबैथोकलाई माया गरेपनि प्रकृतिलाई पनि माया गर है भन्ने गर्छु । जसले प्रकृतिलाई प्रेम गर्छ र जीवनमा उपकार गरेर मानव सेवामा लाग्छ, त्यो मान्छेले भगवान्को आशीर्वाद पनि पाउँछ र मुक्त पनि हुन्छ ।

**अग्निचक्रको सयौँ अंकमार्फत नेपालीलाई के सन्देश दिनुहुन्छ ?**

गणतन्त्रको विरोध गरेको होइन तर मलाई प्रजातन्त्र मनपर्छ । मलाई स्वतन्त्रता मन पर्छ । मेरो आफ्नै अलग अस्तित्व छ, कविको अलग्गै अस्तित्व हुन्छ, अलग्गै चिन्तन छ मेरो र पो अहिलेसम्म सयवर्षसम्म बाँचेको छु, धेरै बुढो भएँ ।

पढ्न नपाएकालाई पढ्न सिकाऔं- अक्षर चिन्ने बनाऔं र सबैले वेद-उपनिषत्-गीता र नेपाली साहित्य पढ्ने गरौं । त्यसो भो भने सबै ज्ञानी बन्छन् । सबै ज्ञानी भएपछि देश पनि बन्छ । अग्निचक्रको सयौं अंक प्रकाशनको सुखद अवसरमा मेरो हार्दिक बधाई तथा शुभकामना छ । जय नेपाल ।

# सयौँ पाइला अगाडि अग्निचक्र






छायादत्त न्यौपाने 'बगर'

**आरम्भ**

सूचनाले जीवनमा गति थप्छ । समाजलाई सक्रिय बनाउँछ । उद्योगधन्दा व्यवस्थित गर्छ । देशको गरिमा उठाउन र जनहित संरक्षणमा सूचनाले महत्त्वपूर्ण भूमिका निर्वाह गर्छ । यसले विश्वमानव समुदायलाई एक ठाउँ जुटाइदिन्छ । मित्रवत साइनो स्थापित गराई आपसी ज्ञान, सिप र सभ्यता आदान-प्रदान गर्न गराउन प्रेरित गर्छ । जीवनका पाटाहरू केलाउने/चिनाउने र आपसी सद्भाव बलियो बनाउने काममा सूचना प्रविधिको उल्लेख्य योगदान रहने गरेको पाइन्छ ।

यसबाट शिक्षा, स्वास्थ्य, कृषि, उद्योग, राजनीति, कानुनी मान्यता समेतका उपयोगी सूचना सम्प्रेषण हुन्छ । सम्प्रेषित सूचनाबाटै यी विविध क्षेत्रमा जनसहभागिता बढाउने वातावरण बन्छ । यसरी सूचना सम्प्रेषण गर्ने प्रविधि र माध्यम धेरै छन् । विद्युतीय प्रसारण बढी प्रभावकारी देखिन्छ । विद्युतीय माध्यम क्षणिक समयमा आउने/जाने र सर्वसाधारणको पहुँच भन्दा पर रहने हुँदा छापा माध्यम बढी प्रभावकारी रहँदै आएको पाइन्छ ।

**परिचय**

छापा सूचना प्रविधि झन्डै तीन हजार वर्ष अघि सुरू भएर विकसित भएको मानिन्छ । प्रारम्भमा कपडा, पातहरूमा रूखविशेषका पात, झार आदिको रसलाई मसीका रूपमा प्रयोग गरी झिँदाले लेखेर सूचना लेन/देन हुँदै आएको सन्दर्भमा कागजको आविष्कार भएपछि सहज हुँदै आएको देखिन्छ । नेपालको सन्दर्भमा विसं. १९५८ गोरखापत्रको प्रकाशन थालनीबाट सूचना प्रसारण हुन थालेको देखिन्छ । सुरूमा सीमित मान्छेहरूले यसको उपयोग गरे । समयक्रमले यसको विकास र विस्तार भई हाल मुलुकभरिका जनताको पहुँचमा पुगेको छ । विशेषगरी राजनीतिक चेतना विस्तारमा छापामाध्यमको महत्त्वपूर्ण देन रहँदै आएको पाइन्छ ।

नेपालमा पनि दैनिक, साप्ताहिक, पाक्षिक, मासिक, द्वैमासिक, त्रैमासिक, अर्धवार्षिक, वार्षिकसमेत हजारौंको सङ्ख्यामा पत्रपत्रिका प्रकाशित छन् । यी कति राजधानी केन्द्रित भई प्रकाशनमा आएका छन् भने धेरै मुलुकभरि पुग्ने गरी प्रकाशित र वितरित छन् । राजधानीमा प्रकाशित भई मुलुकमा पुग्ने र राजधानीबाहिरबाट प्रकाशित हुने पत्रपत्रिका असङ्ख्य छन् । यी सबैको साझा उद्देश्य सामाजिक, राजनीतिक, सांस्कृतिक चेतना विस्तार गर्नु रहेको पाइन्छ । यी अनन्त पत्रिकामध्येको अग्निचक्र मासिक आफ्नै विशिष्ट उद्देश्य लिएर छुट्टै पहिचान बनाउन सफल पत्रिकाको रूपमा स्थापित छ ।

अग्निचक्र मासिक २०६६ असोजदेखि निरन्तर प्रकाशनमा आएको देखिन्छ । सम्पादक/प्रकाशक लक्ष्मीनारायण भट्टराईको सक्रियतामा काठमाडौं जिप्रकामा दर्ता भई प्रकाशनमा आएको अग्निचक्र मासिकका सुरूवाती आठ अङ्कसम्म 'लभश्री' नाममा प्रकाशित भएपछि २०६७ जेष्ठ अङ्कबाट अग्निचक्र मासिकका रूपमा प्रकाशित हुँदै आएको पाइन्छ । दस अङ्क प्रकाशनपछि नै वर्गीकरण छनौट भई क वर्गीय पत्रिकाको रूपमा प्रकाशित अग्निचक्रले आफ्नो सेवा विस्तार गर्दै आएको पाइन्छ ।

विभिन्न छापा र विद्युतीय सञ्चार संस्थाहरूमा संवाददाता, प्रमुख संवाददाता, सहसम्पादकसम्मका भूमिका कुशलतापूर्वक निर्वाह गरेका लक्ष्मीनारायण भट्टराईको सम्पादन/प्रकाशकत्वमा प्रकाशित अग्निचक्र मासिकले नेपाली वाङ्मयको श्रीवृद्धिमा उल्लेख्य योगदान गर्दै आएको छ । नेपाली साहित्यका कथा, कविता, निबन्ध, समालोचना, स्रष्टा संवाद, पुस्तक समीक्षा जस्ता बहुविधाका स्तम्भहरू नियमित प्रकाशन हुनु यसका प्रमाण हुन् ।

अग्निचक्र मासिकले शिक्षा, स्वास्थ्य, वित्तीय संस्था, कृषिलगायतका जीवनोपयोगी विषयका स्तम्भहरूलाई ठाउँ दिएर सर्वसाधारण जनताको सुसूचित हुने हक सुरक्षित गरिदिएको देखिन्छ । यी क्षेत्रमा पनि उत्तिकै सशक्त भूमिका निभाउँदै आएको भेटिन्छ । यसले समयसापेक्ष नवीनतम सूचनाहरू सम्प्रेषण गरी जनतामा चेतना विस्तारमा पनि उत्तिकै सक्रियता देखाएको अनुभूति यसका विविध अङ्कमा सङ्कलित प्रकाशित सामग्रीले दिन्छन् ।

अग्निचक्र मासिकको यात्रा विगतमा केही अप्ठेरो रहेको देखिन्छ तर यसका सम्पादक लक्ष्मीनारायण भट्टराईको अनुभव, मिहिनेत र आत्मविश्वासको कारण यसका कुनै पनि अङ्क छुटेनन् ।

नियमित प्रकाशन भएकै कारण हो विसं.२०६६ असोजमा पहिलो अङ्क निकालेर विसं.२०७६ असारमा आइपुग्दा सयौं अङ्क प्रकाशित गर्न सफल भएको छ । सामाजिक जीवनमा बेग्लै र विशिष्ट पहिचान बनाएको अग्निचक्र मासिकले सुरूवाती चरणदेखि नै तपसिलका उद्देश्य राखेर क्रियाशील हुँदै आएको देखिन्छ । यसले पछ्याउँदै आएका उद्देश्यलाई बुँदामा यसरी पनि उल्लेख गर्न सकिन्छ :

- नेपाली वाङ्मयको श्रीवृद्धिमा योगदान गर्नु
- राजनीतिक चेतना विस्तारमा चासो दिनु
- शैक्षिक उन्नयनका लागि आवश्यक सूचना सम्प्रेषण गर्नु
- धर्मसंस्कृतिको संरक्षणलाई महत्त्व दिनु
- नेपाली जडीबुटीबारे जानकारी सम्प्रेषण गर्नु
- वित्तीय संस्था र तिनका कार्यक्रमबारे जनतालाई सुसूचित तुल्याउनु
- स्वास्थ्य सम्बन्धी विशेष जानकारी र चेतना विस्तार गर्नु
- नवीनतम सूचनाहरू सम्प्रेषण गरी जनतामा लाभ पुऱ्याउनु
- पाठकवर्गमा मनोरञ्जनात्मक सामग्री पस्कनु
- अनुसन्धानमूलक प्रमाणिक सामग्री प्रकाशनलाई महत्त्व दिनु
- ऐतिहासिक स्थलहरूको परिचय दिई पर्यटन विकासमा जोड दिनु
- प्रकृति तथा वातावरण संरक्षणमा ध्यान दिनु
- समाजका विविध पाटाहरूका नवीनतम जानकारी प्रकाशन गर्नु आदि ।




उल्लिखित उद्देश्य प्राप्तिका लागि अग्निचक्र मासिकले तपसिलका कार्यहरू नियमित र व्यवस्थित रूपमा गर्दै आएको पाइन्छ ।

## वाङ्मय सेवा

अग्निचक्र मासिकले नेपाली भाषा साहित्यको विकासलाई विशेष महत्त्व दिएर विविध स्रष्टाहरूका रचनाहरूलाई ठाउँ दिँदै आएको देखिन्छ । यस पत्रिकाले राजधानीमा केन्द्रित नभई मोफसलका स्रष्टाहरूलाई समेत स्थान दिने गरेको पाइन्छ । यसले साहित्यका कथा, कविता, निबन्ध, नाटक, समालोचना, पुस्तक समीक्षा जस्ता विधाहरूलाई उच्च महत्त्वका साथ प्रकाशन गर्दै आएको तथ्य यसका प्रत्येक अङ्क हेर्दा पुष्टि हुन्छ । कोशकार वसन्तकुमार शर्म्मा, प्रा.गोपीकृष्ण शर्मा, रामप्रसाद पन्त, डा.रामप्रसाद ज्ञवाली, प्रदीप नेपाल, छायादत्त न्यौपाने 'बगर', खेमलाल पोखरेलजस्ता धेरै जना स्रष्टाहरूका विचारलाई अन्तर्वार्तामार्फत पाठक समक्ष पुऱ्याउँदै आएको पाइन्छ । यसले स्थापित र अग्रज स्रष्टालाई मात्र नभई नवप्रतिभाहरूलाई प्रोत्साहन गर्न पनि कन्जुस्याइँ गरेको अनुभूत हुँदैन । यसरी विविध सामग्रीहरूको प्रकाशन गरी नेपाली वाङ्मयको विकासमा बलियो देन दिँदै आएको छ अग्निचक्र मासिकले । यसले साहित्यिक संस्थाहरूका गतिविधिको चर्चा र तिनका विचारको पनि समाचार मूलक प्रचार प्रसार गर्दै आएको पाइन्छ ।

## राजनीतिक चेतना

अग्निचक्र मासिकले विभिन्न राजनीतिक घटनाक्रमबारे समाचार सम्प्रेषण गरेर जनमानसमा चेतना बढाउने प्रयास गर्दै आएको देखिन्छ । यस सन्दर्भमा पूर्व प्रधानमन्त्रीहरू झलनाथ खनाल, सुशील कोइराला, शेरबहादुर देउवा, लोकेन्द्रबादुर चन्द, सूर्यबहादुर थापा, महन्त ठाकुर, राजेन्द्र महतोजस्ता विभिन्न नेताहरूका दर्जनौं अन्तर्वार्ता प्रकाशन गर्दै आएको छ । यस्तै नेपाल कम्युनिष्ट पार्टी क्रान्तिकारी माओवादीका महासचिव मोहन वैद्य किरण, विप्लव, राप्रपाका कमल थापालगायतका नेताहरूका विचारलाई बेला बखत स्थान दिँदै अएको देखिन्छ । जसबाट सर्वसाधारण जनतालाई राजनीतिक गतिविधिबारे जान्न पाउँछन् । व्यक्ति विशेषका विचारहरूसँगै नियमित गतिविधिले दिने सूचनाहरू पनि नछुटाई दिँदै आएकाले अग्निचक्र मासिकले समसामयिक सूचना प्रवाहमा पनि देन दिँदै आएको छ भन्दा बढी नहोला ।

## धार्मिक आस्था

अग्निचक्र मासिकका सम्पादक प्रकाशक लक्ष्मीनारायण भट्टराई आफै पनि अध्यात्ममा आस्था राख्ने, विश्वास गर्ने आस्तिक व्यक्तित्वका रूपमा देखिन्छन् । उनको यस्तो स्वभावले पनि अग्निचक्रमा धार्मिक स्तम्भले नियमित स्थान दिएको हुनुपर्छ । अग्निचक्र मासिकका अङ्कहरूमा क्रमशः श्रीमद्भगवत गीताका अठारै अध्यायको नेपाली अनुवाद प्रकाशित भएको देखिन्छ । उन्नाइसौं पटकमा गीतासार प्रकाशित गरेर सम्पादक भट्टराईले गीतामा सन्निहित महत्त्वपूर्ण ज्ञान सरल तरिकाले सर्वसाधारण जनतामा सम्प्रेषण गरेका छन् । यसैगरी वसन्तकुमार शर्म्माकै अनुवाद उपनिषद्का गहनतम सन्देशलाई बयालीसवटा अङ्कहरूमा लगातार प्रकाशित गरेको भेटिन्छ । यस्तै नेपाली संस्कार संस्कृतिप्रति आस्था र विश्वास बढाउने काम गर्दै आएका छन् । यसो भनिरहँदा पाठकहरूलाई अग्निचक्र कुनै धार्मिक अन्धविश्वास प्रवाहमा त लागेको छैन ? भन्ने लाग्न सक्छ तर अन्धविश्वासी होइन व्यवहारमा देखिने सन्तुलित संस्कार संस्कृतिका पक्षमा वकालत गर्ने पत्रकारका रूपमा देखिन्छन् भट्टराई । अवैज्ञानिक र अन्धविश्वास बढाउने खाले आस्था नभई श्रीमद्भगवत गीता र उपनिषद्जस्ता दार्शनिक चेतना सम्प्रेषण गरी सर्वसाधारण पाठकवृन्दमा लाभ पुऱ्याउने उद्देश्यले अघि बढेको देखिन्छ ।

## जडीबुटी प्रवर्धन

अग्निचक्र मासिकले नेपाल वन जङ्गलमा छरिएर रहेका वनस्पतिका दृष्टिले विश्वमै अगाडि छ, सम्पन्न छ । यहाँ अनेकौं जडीबुटी उत्पादन हुन्छन् । यिनको सही उपयोग हुन सके नेपालीको अर्थतन्त्र बलियो बनाउन सकिन्छ ।

यसबाट हामी स्वरोजगार बन्न सक्छौं भन्ने जीवनोपयोगी सन्देश प्रवाह गर्दै आएका छन् । यार्सागुम्बा, कालीसिन्की, असुरो, अरदी, कुरिलो जस्ता अनेकौं जडिबुटी उत्पादन, प्रयोग र निर्यातबाट मुलुकलाई अघि बढाउन सकिने बलियो सम्भावनालाई सशक्त ढंगले देखाएका छन् । यी र यस्तै विचारको पुष्ट्याइका लागि भिन्न भिन्न अङ्कहरूमा विभिन्न विषय विज्ञका अन्तर्वार्ताहरू प्रकाशित गरेको पाइन्छ । यसबाट आयुर्वेदीय पद्धतिको प्रचार प्रसारमा समेत योगदान पुगेको देखिन्छ ।

## वित्तीय संस्था

अग्निचक्र मासिकले सर्वसाधारण नेपाली जनतामा वित्तीय संस्थाबारे जानकारी

दिने प्रयास गर्दै आएको देखिन्छ । वित्तीय संस्थाहरूबाट जनता कसरी लाभान्वित हुन सक्छन् भन्ने विषयलाई समाचारमूलक सूचना र त्यस क्षेत्रमा विशेष अनुभव संगालेका विभिन्न संस्थाका कार्यकारी प्रमुखहरूका अन्तर्वार्ता समेत प्रकाशित गरेर विश्वसनीयता कायम गरेका छन् ।

**स्वास्थ्यसम्बन्धी सूचना**

अग्निचक्र मासिकले जनताको नियमित चासोको विषयलाई महत्वका साथ सम्प्रेषण गर्दै आएको देखिन्छ । यसले स्वास्थ्यसम्बन्धी विशेष जानकारी, सल्लाह सुझाव, विशेषज्ञका विचार, अनुभव बताएर जनतालाई लाभ पुऱ्याएको देखिन्छ । डा. अञ्जनीकुमार, डा.करवीरनाथ योगी, डा. कमल शर्मा लम्साल, डा.सुधांशु जस्ता व्यक्तित्वहरूका नियमित स्तम्भहरू प्रकाशन गरेर जनताको सुसूचित रहन पाउने हकको सम्मान गरेको छ । अर्वुदजस्ता प्राणघातक रोग बारे आवश्यक जानकारी दिँदै बच्ने उपायहरूको खोजी, उपचार पद्धतिबारे सूचना दिने विषयमा अग्निचक्रले कन्जुस्याइँ गरेको देखिदैन । यसले स्वास्थ्य नै ठुलो धन हो भन्ने भनाइ अनुसार स्वास्थ्यका लागि आवश्यक सल्लाह र थरीथरी रोगका विशेषज्ञहरूको अन्तर्वार्ता र विचार सबै जसो अङ्कहरू सम्प्रेषण गर्दै आएको देखिन्छन् ।

**मनोरञ्जनप्रद सामग्री**

अग्निचक्र मासिकले पाठकको मनोविज्ञान बुझेर पाठ्यसामग्री प्रकाशन गर्ने पत्रिकाका रूपमा आफूलाई स्थापित गरेको अनुभूत हुन्छ । यस स्तम्भमा उखान टुक्का, गाउँखाने कथा, ठट्यौली व्यङ्ग्य रचना, कलाकारहरूसँगका अन्तर्वार्ता जस्ता पाठ्यसामग्री प्रकाशनमा ल्याएको पाइन्छ । यस्तो सामग्रीले पाठकवृन्दलाई रमाइलो त गराउँछन् नै साथै नेपाली भाषाको वाक्यपद्धतिको प्रवर्धनमा पनि उल्लेख्य टेवा पुऱ्याइरहेका हुन्छन् । यसरी हेर्दा अग्निचक्र पत्रिका थरीथरी पाठकको मन छुन सफल देखिन्छ ।

**नवीनताको खोजी**

अग्निचक्र मासिकलाई फरक विधि प्रक्रियाबाट प्रकाशित हुँदै आएको पत्रिकाका रूपमा पनि लिन सकिन्छ । यसले विज्ञानप्रविधिका नयाँ नयाँ आविष्कारहरू बारे पाठकलाई जानकारी दिने प्रयास गरेको देखिन्छ । यसै गरी नेपाली युवा वैज्ञानिकहरूको आविष्कारलाई चर्चामा ल्याएर हौसला बढाउने प्रयत्नमा पनि यो अग्निचक्र मासिक पछाडि सरेको देखिँदैन ।

**कृषि प्रविधि**

अग्निचक्र मासिकले किसानहरूलाई पनि स्थान दिएको पाइन्छ । किसानका समस्या उठाई तिनको समाधानमा लागि सम्बन्धित निकायलाई घचघच्याउने प्रयत्न गरेको पाइन्छ । यसले विभिन्न समयमा हुने च्याउखेती, बाख्रापालन, माछापालन, फलफूल खेती जस्ता आयमुलक खेतीहरूबारे विज्ञहरूका सल्लाह सुझाव प्रकाशनमा ल्याएको पाइन्छ । बेलाबखत प्रकाशनमा आउने नयाँ नयाँ सूचनाहरू किसानसम्म पुऱ्याउने काम पनि अग्निचक्रको देन रहँदै आएको देखिन्छ । यसले विश्वबजारमा आएका नयाँ प्रविधि र कृषि उपकरणबारे जानकारी दिने प्रयास पनि उत्तिकै सशक्त ढंगले गर्दै आएको पाइन्छ ।

**वातावरण संरक्षण**

अग्निचक्र मासिकले नेपालको मात्र नभई विश्व समुदायमै देखिएको वातावरण सम्बन्धी चुनौतीहरू बारे सूचना दिने काम गरेको देखिन्छ । यस पत्रिकाले समस्याको उठानसँगै समाधानका लागि तत् विषय विज्ञका विचारहरू पनि दिने गरेको छ । अग्निचक्र जीवनजगतका व्यावहारिक पाटाहरूसँग पनि लछप्प भिजेको पत्रिका हो भन्न सकिन्छ । यसले वन र वन्य सम्पदाहरूको संरक्षण प्रवर्द्धनमा मद्दत पुग्ने गरी चेतनामूलक सामग्रीहरूलाई ठाउँ दिने गरेको देखिन्छ । यस्तो प्रयास समस्त सबैको हितमा रहेको अनुभूत हुन्छ । वातावरण सम्बन्धी चेतनामूलक सामग्री र यसबारेमा हुँदै आएका अभियानबारे समाचार पनि दिने गरेको पाइन्छ ।

**पर्यटन विकास**

अग्निचक्र मासिकले नेपालका ऐतिहासिक संस्कृतिक महत्त्वका स्थलहरूको प्रचार-प्रसारमा पनि आफ्नो सक्रियता देखाएको पाइन्छ । ती ऐतिहासिक ठाउँहरूको परिचयसँगै आवत-जावतबारे जानकारी सम्बन्धमा तत् विषयका विज्ञहरूको विचार सल्लाह, सुझावहरू समेटेर समाचार छाप्ने गरेको पाइन्छ । जुन देशको अर्थतन्त्र उकास्ने प्रयासमा समेत उल्लेख्य काम हो । यसतर्फ पत्रिकाको चासो रहेको प्रमाण पत्रिकाले निरन्तर पर्यटनसम्बन्धी विज्ञहरूका अन्तर्वार्ता र समाचार सम्प्रेषण नै पनि हो । यसबाट खास गरी आन्तरिक पर्यटन प्रवर्द्धनमा टेवा पुगेको देखिन्छ ।

यस पत्रिकाले नेपालको भूगोललाई पनि औंधी माया गरेको देखिन्छ । राष्ट्रिय स्वाधीनताका विषयमा २०७२ को माघ, चैतका अङ्कहरूमा प्रकाशित समाचार तथा सम्पादकीयबाट प्रष्ट हुन्छ कि अग्निचक्र कति संवेदनशील छ । यसले नेताहरूको विदेशी हस्तक्षेप पन्छाउन नसक्ने कमजोरी अनि चाकरी गर्ने दास मनोवृत्तिप्रति गतिलै प्रहार पनि गर्ने गरेको पाइन्छ । अग्निचक्रले योग साधनालाई विषय बनाएर पनि सामग्री प्रचार प्रसारमा ल्याएको पाइन्छ । यसै गरी एकै पटकमा एउटै प्रकाशकबाट प्रकाशित एकचालिसवटा पुस्तक विमोचन भएको समारोहको समाचार पनि यसले नछुटाएको देखिन्छ । प्रारम्भदेखि उस्तै आकार प्रकारमा रहेर राम्रो कागजमा उपयोगी सूचना दिन सफल हुने अग्निचक्र आउँदा दिनमा अझ बढी सशक्त प्रस्तुति दिन सक्नेछ भन्ने विश्वास गर्न सकिन्छ ।

**अनुसन्धानात्मक प्रस्तुति**

कुनै पनि विषयबारे तथ्यपरक जानकारी समेटेर जीवन पद्धतिलाई वैज्ञानिक आँखाले हेर्ने प्रयास गर्नु अनुसन्धान हो भन्ने मान्यता रहेको पाइन्छ । यसै मान्यतानुरूप अग्निचक्र मासिकले अनुसन्धानात्मक सामग्रीहरू प्रकाशन गरेर पाठकहरूमा सही सूचना सम्प्रेषण गर्दै आएको छ । यसले प्रकाशित गर्ने गरेका धेरै जसो सामग्रीमा विषय विज्ञहरूका मत पाइने हुँदा सूचनाप्रति विश्वसनीयता पनि कायम रहेको पाइन्छ ।

**शैक्षिक उन्नयन**

शिक्षा मानव समुदायलाई सभ्य, शालीन, गतिशील प्रगतिमुखी चेतना सम्प्रेषण गर्ने माध्यम हो । विद्वान्हरू जीवनजगतका विकासका सबै आधार शिक्षामै निहित रहने कुरा स्वीकार गर्छन् । अग्निचक्र मासिक पनि यो विचार भन्दा पर देखिदैन । यसले विभिन्न विद्यालय, महाविद्यालय, विश्व विद्यालयका विज्ञ एवं प्राचार्यहरूका शिक्षासम्बन्धी विचारहरू प्रकाशित गर्दै आएको पाइन्छ । यसबाटै प्रस्ट छ कि यस पत्रिकाले शैक्षिक जगतसँग जनमानसलाई

परिचित गराउन खोजिरहेको मात्र नभई बल गरिरहेको देखिन्छ। यसले +२ पढ्ने विद्यार्थी र तिनका अभिभावकको आवश्यकता र जिज्ञासाहरूलाई समेत समेटेर बेलाबखत सूचनाहरू प्रकाशन गर्दै आएको पाइन्छ। स्वास्थ्य शिक्षा र उच्च शिक्षामा देखिएका समस्या र तिनको समाधानबारे विज्ञहरूका विचार बाहिर ल्याउने काम यसबाट समयमै हुँदै आएको पाइन्छ।

**विविध विषय :**

अग्निचक्र मासिकले कुनै खास क्षेत्रमा केन्द्रित रहेर भन्दा धेरै क्षेत्रमा आफूलाई पुऱ्याएर सूचनाहरू बटुल्दै र प्रकाशन गर्दै आएको पाइन्छ। यसले समाजले अँगाल्ने विविध विषयहरूसँग जोडिएका सूचना प्रकाशन गर्दै आएको देखिन्छ।

यसभित्र थरीथरी सूचनाहरू हुन्छन् जुन मानवजीवनका लागि महत्त्वपूर्ण भएर पनि जानकारीमा ल्याउन भ्याइएको हुँदैनन्। अग्निचक्र मासिकका सम्पादक/प्रकाशक लक्ष्मीनारायण भट्टराई यस्तै व्यावहारिक ज्ञान भएका व्यक्ति भएको हुँदा उनले आफ्नो उद्देश्य जस्तै व्यवहारोपयोगी बनाएर आफ्नो काम गर्ने टिमलाई पनि तदनुकूल परिचालन गर्ने गरेको पाइन्छ। उनको यस्तो प्रयास पाठकवृन्दमाझ सुपरिचित हुन पुगेको छ। यो सञ्चारको दुनियाँसँग भिजेका भट्टराईको प्राप्ति पनि हो। अग्निचक्रले आयुर्वेदजस्तो प्राचीन चिकित्सा पद्धतिका विषयमा पनि आफ्नो उपयोग गर्दै आएको देखिन्छ। आयुर्वेदीय पद्धतिको प्रचार-प्रसारसँग त्यसका विशेषताहरू सर्वसाधारण समक्ष पुऱ्याएर त्यसबाट परिचित गराउने प्रयत्न हुनु आफैमा महत्त्वपूर्ण उपलब्धि हो भन्न सकिन्छ।

**अन्त्य**

काम गर्ने सन्दर्भमा सफलताका सङ्केतहरूसँगै चुनौतीका पहाडहरू पनि उभिएकै हुन्छन्। अग्निचक्रले पनि साथीभाइहरूको विरोध, आर्थिक अभाव, राजनैतिक पूर्वाग्रह राखेको आरोपजस्ता गल्छेडाहरू उक्लेर भन्ज्याङ र देउराली हुँदै यो उचाइसम्म आइपुग्न भ्याएको देखिन्छ। अग्निचक्र मासिकका साथीहरूले थुप्रै विघ्नबाधाहरू उछिनेर अघि आउनु परेको अनुभव सम्पादक लक्ष्मीनारायण भट्टराईसँग रहेको पाइन्छ।

तर सयौं अङ्कसम्म आइपुग्दाको सफलताले उनलाई ती सामान्य घटना थिए काम गर्दै हिँड्दा सानातिना समस्या आउनु ठूलो कुरा होइन बरू तिनले त अझ जिम्मेवारीका साथी अघि बढ्न सिकाएको कुरा भट्टराई हाँसी हाँसी सुनाउँछन्। उनी भन्छन्- 'खोलाका ढुंगा आपसमा ठोक्किएर त चिप्लिने हुन्।' यसरी घामपानी र उकाली ओराली गर्दै यहाँसम्म आइपुग्दा सफलताको सास लिएर खुसी प्रकट गर्न भट्टराई र उनको समूह कन्जुस्याइ गर्दैन।

अग्निचक्र मासिकले समाजका हरेक मानिसलाई आफ्नो पाठक बनाउने प्रयत्न गरेको देखिन्छ। बजारमा भेटिने धेरैजसो पत्रिकाहरू विधा विशेषमा केन्द्रित हुन्छन् तर अग्निचक्रले विविध विधामा आफूलाई पुऱ्याएर धेरैभन्दा धेरै पाठक वृन्दको मन जित्ने प्रयास गर्दै आएको पाइन्छ। यसले शैक्षिक जगत, स्वास्थ्य क्षेत्र, खेलकुद, अर्थतन्त्र, मनोरञ्जनसँगै स्रष्टा र सिर्जनालाई विशेष महत्त्व दिएर नेपाली वाङ्मयको श्रीवृद्धिमा गतिलो योगदान गर्दै आएको छ। यस्तै महत्त्वपूर्ण सामग्रीहरूले अग्निचक्र मासिक पत्रिका तथा यसका सम्पादक/प्रकाशकलाई जीवन्तता प्रदान गरेको देखिन्छ। यसले दिने सूचनाका स्रोत भेट्दै, भाषिक परिष्कार गर्दै, वितरणमा थप व्यवस्थित हुँदै जाओस्। यी र यस्तै केही सीमाहरू उछिनेर अघि लाग्न सकोस्, गन्तव्य सहज बन्दै जाओस्, सयौं अङ्क प्रकाशनको यस सुखद घडीमा यही शुकामना दिन्छु। अस्तु।

## शुभकामना

राजधानीबाट निरन्तर प्रकाशित हुँदै आएको अग्निचक्र राष्ट्रिय मासिकले सफलतापूर्वक ९९ अंक पूरागरी १०० अंक प्रकाशनको अवसरमा अग्निचक्र टिमलाई हार्दिक बधाई दिँदै निरन्तरताको लागि हार्दिक शुभकामना व्यक्त गर्दछौं ।

– **ज्योतिप्रकाश पाण्डे,** प्रमुख कार्यकारी अधिकृत

तथा

नेपाल इन्भेष्टमेण्ट बैंक लि.
NEPAL INVESTMENT BANK LTD.

# ज्येष्ठ नागरिक : राष्ट्रको सम्मान





**मायादेवी शर्मा**
कैलासकुञ्ज, काठमाडौं

नेपाल सरकारले ज्येष्ठ नागरिकका लागि सुविधा होस् भनेर कार्ड दिएको छ। कतिले त्यो बनाएकै छैनन् होला। बनाउनेले के केमा सुविधा पाएका छन्। त्यो कुरा त समाजका ज्येष्ठ नागरिकलाई थाहा होला कि उनका निकटतम सहयोगीलाई। म धेरै जसो मेरा श्रीमानसित यात्रा गर्छु। पतिदेवले आफूले पाएको जेठो कार्ड कोटको खल्तीमा राखेर त हिँड्नुहुन्छ।

भाडा तिर्ने बेलामा त्यो कार्ड धेरै ठाउँमा काम लाग्दैन। छोटो दूरीमा चल्ने साझाबस र केही ठुला मोटरले त किचकिच गर्दैनन्। कतिपय माइक्रोबसमा चढ्यो भने बुढो कार्ड निकाल्न पर्दैन। निकाले त खलाँसीको बोलीको पर्रा छुट्छ –त्यस्तो कार्ड माइक्रोमा चल्दैन।

थाहा छैन ? कस्ताकस्ता मान्छे गाडी चढ्छन् यार... । ए बुढा थुपुक्क पैसा निकाल । बुढाबूढी भइसकेका आमाबाबालाई सहचालकको यस्तो बोली सुन्दा मनमा पीरो हुन्छ । लाग्छ– यहाँ मान्छेको बोलीमा पनि गरीबी छ । त्यहीँ मोटरमै कार्ड झुन्ड्याएको हुन्छ– **जिभ्राको गरिमा, मीठो बोलीमा।** तर आफ्नै गरिमा झरेको थाहा छैन । फेरि मीठो बोल्न पैसा चाहिने हैन । त्यही बोली मिलाएर बुबाआमा ! यो कार्डमा हामीले छुट दिँदैनौं भने हुन्थ्यो ।

आमा बा त ती सहचालकका अनि चालकका पनि होलान्। बुढाबूढीमान्छे कामै नपरी घुम्न भनेर को निस्केला ? सरकारले ज्येष्ठ नागरिकलाई दिएको सुविधा अरे त्यो कार्ड । हाम्रो जन्मघर बाग्लुङ हो । एकपटकको कुरा हो। हामी दुवैजना पहाड जान बाटो लाग्यौं । बसपार्कमा टिकेट काउन्टरमा पुगियो ।

मैले टिकेटको पैसा दिने बेलामा भित्रतिर फर्केर भनें– भाइ ! बुबाको कार्ड छ। छुट हुन्छ कि ? उसले हाँस्तै भन्यो–त्यो कार्डले कहाँ कन्सेसन पाइन्छ। पाइँदैन। यो त लामो दूरीको बस पो हो। यसरी छुट दिँदै हिंडे त हामी सखाप हुन्छौं नि। मैले केही नबोलीकन उसले भनेको जति भाडा दिएँ। म बसमा बसेँ। मनमा प्रश्न उठ्यो।

प्रायः चलाउन नसक्ने कार्ड सरकारले किन दिएको होला। सीटमा बसेपछि पनि सहचालकले अल्लि उता सरेर बस्नुहोस् न भन्दै यात्रुलाई धकेल्छन्। उनीहरूले ज्येष्ठ नागरिकलाई समेत घुच्याउन पछि पर्दैनन्।

मोटरमा गुन्द्रुक झैं मान्छे कोचेर कुदाउने प्रवृत्ति देखिन्छ। कहिलेकाहीँ हिँड्ने हामी जस्ताले देख्ने कुरा सडकमै सिठी फुकेर बस्ने पुलिसले देखेका छैनन् होला त ? एक पटक यस्तै ठेलेर मान्छे राखेको माइक्रोमा मेरा श्रीमानको नयाँ चश्मा भाँचियो।

त्यसको क्षतिपूर्ति अब को तिर्छ ? म कार्डमा नै आउँछु। सरकारले जेष्ठ नागरिकलाई दिएको सुविधा अरे त्यो कार्ड । अब मेरो मनमा प्रश्न सल्बलायो– अस्पताल वा अन्यत्र पनि त्यस्तै ज्येष्ठ नागरिकलाई सुविधा चाहिने ठाउँमा त्यस्ता कार्डको महत्व कति छ कुन्नि ?

ज्येष्ठ नागरिकको सम्मान राष्ट्रको सम्मान हो। त्यसमा सबै जात, सबै धर्म, सबै लिङ्ग, सबै समुदाय र सबै हैसियतको सम्मान भएको हुन्छ।



**मुकुन्द शर्मा चालिसे**
बुढानीलकण्ठ-४, कैलासकुञ्ज




## अग्निचक्र बनोस् नित्य शिव सत्य मनोहर

धवलागिरि झल्कन्छ साथमा मुक्तिनाथ छन्
अग्निचक्र सधैं चल्छ साथमा धेर हात छन्

जान्न आकाशको रङ्ग दूर्वाको हुन्न मृत्यु रे
जति पानी छचल्काऊ गण्डकी धन्य उत्ति रे

आत्माको रुप फेरिन्न कैयौं युग गले पनि
अग्निचक्र अझै बल्छ विघ्नै हुरी चले पनि

स्रष्टाका भावना आऊन् शिल्पसौन्दर्यमा मुछी
हिजोभन्दा आज राम्रा अझ राम्रा बनून् पछि

यसका अङ्ग हेरेर पाऊन् पथिकले पथ
विद्वान्को साथ पाएर को हुँदैन उमङ्गित ?

गद्यका चातुरी आऊन् छन्दका माधुरी दिऊन्
दूर दूर छटा चम्कून् शिष्ट दर्शक लोभिऊन्

युगका विम्बका साथ नाता जोडी सरासर
अग्निचक्र बनोस् नित्य शिव सत्य मनोहर



**निरन्तर प्रकाशित हुँदै आएको अग्निचक्र राष्ट्रिय मासिकले सफलतापूर्वक ९९ अंक पार गरी १०० अंक प्रकाशनको अवसरमा अग्निचक्र परिवारलाई हार्दिक बधाई तथा शुभकामना व्यक्त गर्दछु ।**

बीमा सेवक
**– विक्रान्त पाण्डे**

# अग्निचक्रसँगको मेरो यात्रा

सन् २०१५ देखि एउटा पुरानो घरानियाँ कम्पनीमा पूर्वाञ्चल (हेटौँडादेखि झापासम्म) क्षेत्रको मार्केटिङको अवसर मिल्यो । उक्त कम्पनी योजना, लक्ष्य र बजार सर्भेक्षणमा विश्वास गर्दो रहेछ । काम गर्ने सिलसिलामा काठमाडौं उपत्यकामा पनि मार्केटिङ गर्ने जिम्मेवारी आयो । ल्यापटप, मोबाइल सुविधा दिए पनि सवारी साधनको सुविधा लिइएको थिएन उपत्यकाको मार्केटिङमा । कम्प्युटर, ल्यापटप प्रयोग गरी सफ्ट कपी मात्र इमेल गर्न भन्यो कम्पनीले । आफ्नो कार्य क्षेत्रको भ्रमणपछि बचेको समय उपत्यकालाई दिनुपर्थ्यो ।

आफ्नो ढंगले टङ्कन गरी एक्सेल र वर्ड फाइल बनाउन नसक्ने थिएँ म । अतः डेक्सटपको सहारा लिन पुगें । त्यहीं पुतलीसडकस्थित एक डेक्सटपमा पहिलो भेट भयो- अग्निचक्रसँग । त्यस बेला हाम्रो जम्काभेट मात्र भएको थियो । त्यसपछि क्रमशः डेक्सटपमा अग्निचक्र मासिक अर्थात् सम्पादक एल एन भट्टराईसँग थोरै थोरै परिचय हुन थाल्यो । सन् २०१५ कै समयमा मैले एमए मानवशास्त्र (पाटन बहुमुखी क्याम्पस) को नमुना महिला विद्यालय र यसका प्रभावहरू शीर्षकको सोधप्रस्ताव स्थलगत अध्ययन एवं वैयक्तिक अध्ययनको टङ्कन गराउँदा समेत सम्पादकसँग आक्कलझुक्कल भेट हुने गर्थ्यो ।

सन् २०१६ देखि कम्पनीको मार्केटिङको जागिरबाट हात धुनुपऱ्यो । मैले राम्रो काम गरेवापत विभागीय प्रमुखले खोइरो खन्यो, इर्ष्या गऱ्यो । मलाई बजारविस्तार गर्न र लक्ष्यमा पुग्न दिएन । गोल गर्न खोज्यो बारम्बार गोल्की र व्याक्की बनिरह्यो विभागीय प्रमुख । ममाथि यतिसम्म गरियो कि नियुक्तिपत्र समेत झुक्याएर मागी गायब गरिदियो । दबाव, कचकच पटक्कै मन परेन मलाई । अन्य विभाग (मेरो अनुभव नभएको व्यापार बजार) को प्रस्ताव कम्पनी मालिकले राखे पनि मैले उक्त जागिर लत्याइदिएँ किनभने मेरो स्वाभिमानले आफूलाई अपमान गरेको ठान्यो । सन् २०१५ भरि मार्केटिङसँगै 'बगर' पत्रिकामार्फत साहित्यको प्रवर्द्धन गर्न चाहिँ छोडिनँ । सन् २०१५ भरि 'बगर' ले मनु ब्राजाकी विशेषाङ्कको तयारी गरेको थियो । सन् २०१६ को साउन १९ मा ब्राजाकी विशेषाङ्क विमोचनको कार्यक्रम बनेको थियो ।

एक्कासि वि.सं. २०७३ जेठ १६ गते विहानीपख नकुल सिलवालले आत्महत्या गर्न पुगे । हामी मर्माहित भयौं । साहित्यको इतिहासमा अपूरणीय क्षति भएको ठान्यौं । नकुल सिलवालसँगै बगरको पनि अवसान भएको ठानें । साहित्यिक सारथि नहुँदा म टुहुरो जस्तै बनें । उक्त दुखद् घटनापश्चात् 'अग्निचक्र' का सम्पादक एल एन भट्टराईले नकुल सिलवालको समवेदना छपाए- निःशुल्क । अग्निचक्र परिवार एवं बगर पत्रिकाका संयोजक विमल अधिकारीको तर्फबाट समवेदना दिइएको भनी उद्धृत गरिदिए । उदार, उदात्त एवं मित्रवत् स्वभाव देखाउँदै सम्पादक भट्टराईले गरेको सहयोगी/सहृदयी व्यवहारबाट म थोरबहुत प्रभावित भएँ । साहित्यका स्तम्भ पनि भएको, गुणस्तरीय मासिक पत्रिकाका सम्पादक एल एन भट्टराईको पृष्ठभूमि जान्न चाहिनँ- मैले । उक्त मासिक पत्रिकामा साहित्यिक अन्तर्वार्ता, पुस्तक समीक्षा, वेद-दर्शन समीक्षा एवं केही कविताहरू समेटिएको पाइए पनि विधागत रचना पाइएन ।

पाठकहरूले कथा, संस्मरण, समसामयिक लेखको अपेक्षा गरिरहेको अवस्थामा अग्निचक्रले विधागत रचनालाई समेट्न नसकेको पाइयो । सुरू-सुरूका दिनमा अग्निचक्र व्यापारिक प्रयोजनमा केन्द्रित होला भन्ने मेरो भ्रम थियो । क्रमशः त्यो भ्रम निवारण गरिदिए- सम्पादक भट्टराईले । दिनप्रतिदिन, प्रत्येक महिना प्रायः साहित्यको प्रवर्द्धनमा नै सम्पादकले समय खर्चिरहेको पाएँ मैले । म पनि 'बगर' को अवसान पछि पत्रिकाको स्पेश खोजिरहेको थिएँ किनकी म साहित्यिक प्रवर्द्धनमा थिएँ ।

वि.सं. २०७३ गर्मीयाममा अर्थात् नकुलको निधन भएको एक/दुई महिनापछिको अङ्कमा नकुल सिलवालद्वारा लिखित 'वरपर' (नियात्रा सङ्ग्रह) को पुस्तक समीक्षा अग्निचक्रले छपायो । मैले निकै मिहिनेत गरेर समालोचना जस्तै लेखेको थिएँ । उक्त लेख छापिएपछि मलाई लेखनमा सन्तुष्टि भएको पाएँ ।

नकुल अर्थात् 'बगर' को निधनपश्चात् म साहित्यिक वृत्तमा उपायहीन भएको थिएँ । करिब एक दशकदेखि साहित्यको प्रवर्द्धन-लेखनमा सक्रिय भएको विमल अधिकारीको लेख छाप्न अन्य कतिपय पत्रिकाहरूले आनाकानी गरिरहेको अवस्था थियो । त्यस्तो परिस्थितिमा गुज्रिरहेको मलाई अग्निचक्रले उदात्त, उदार एवं प्रकाशनका मामिलामा सहज व्यवहार देखायो । सम्पादकले स्पेस (स्थान) दिने सङ्केत गरे । मलाई पनि साहित्यको प्रवर्द्धन गर्ने प्लेटफर्म मिलेको ठानी पुनः साहित्यिक गतिविधिसँगै आफ्नो काम (आफ्नै मार्केटिङ एवं शिक्षण पेसा) मा लागें । नाम, प्रसिद्धिसँगै साहित्य-सेवा अग्निचक्रमार्फत पनि पूरा गर्न सकिन्छ भन्दै लागिपरिरहें । अग्निचक्रले मेरो कुरालाई कहिल्यै नाइँ नभन्ने वातावरण मैले बनाएँ ।

वि.सं. २०७३ को असार-साउनतिर अग्रज कथाकार/गजलकारको अन्तर्वार्ताका लागि पहल गरें । पत्रिकाका सम्पादकलाई भैंसेपाटी नयाँबजारस्थित मनु निवास पुऱ्याएँ, अन्तर्वार्ता दिलाएँ । उक्त अन्तर्वार्तासँगै मनुको समसामयिक विकृतिको चित्रण भएको गजल पनि छापियो- अग्निचक्रमा । उक्त अन्तर्वार्ता घतलाग्दो, सटिक थियो । नयाँ कुरा पनि बताइएको थियो ।

लालीको प्रचार हुन्छ भने कालीको पनि हुनुपऱ्यो । –मनु ब्राजाकीको प्रथम प्रकाशित रचना भऱ्याङ कथा भनिए पनि प्रथम रचना 'रक्तदान' शीर्षकको कविता (२०१९) हो ।

उक्त अंकमा छापिएको अन्तर्वार्ता एवं गजलको न्यूनतम पारिश्रमिकको अपेक्षा मनु ब्राजाकीले गरेका थिए । कारण थियो- आर्थिक अवस्था । जे होस् हाम्रा लागि प्रकाशन ठूलो कुरा थियो ।

सन् २०१५ को कुनै महिनाको एक दिनको शनिबारको दिन म व्यङ्ग्य लेखनमार्फत् साहित्यिक वृत्तमा अघि बढिरहेका महेश थापालाई भेट्न गएँ । उनको शारीरिक अवस्थाबारे सुनेर, चिन्तित भएर गएको थिएँ । जिल्लावासी एवं प्रवीणता प्रमाणपत्र तह (सुखेपोखरी, सर्लाही) २०५०/०५२ का सहपाठी मित्र भएकाले सानोठिमीस्थित उनकै निवास पुगें । महेशले मलाई आफूले पुस्तक प्रकाशित गराएको भन्दै 'अल्पविराम' हातमा थमाइदिए । वि.सं. २०७० मा समीसम प्रकाशन काठमाडौंले

प्रकाशित गरेको 'आत्मकथा' कृति बोकेर बागबजारस्थित डेरा आएँ । पुस्तक समीक्षार्थ नभनी उपहार दिएझैं गरेका थिए- महेश थापाले । सन् २०१६ को गर्मीयाममा पुस्तक पढेपछि समीक्षा नगरी चित्त बुझेन । गम्भीर अध्ययन गर्दै गतिलै तरिकाले लेखें । मैले बढी नै बुझें महेश थापालाई किनभने हामी एउटै परिवेशका थियौं । मैले उक्त पुस्तक समीक्षामा महेशबारे यस्तो टिप्पणी गरें–

–युवा दम्पतीको मार्मिक कहानी, –पुस्तक पढेपछि पाठकको गलो अवरूद्ध हुनेछ... आँखा रसाउनेछ, –महेशको लेखनमा दम छ नेपाली भाषा साहित्यका विद्यार्थीहरू महेशको लेखनलाई ईर्ष्या गर्नेछन्, यो नै थापाको विशेषता हो ।

कतिपय साहित्यकारहरूलाई लेखन प्रकाशनमार्फत प्रवर्द्धन गराइरहेको मैले महेश थापालाई पनि प्रवर्द्धन गर्नुपर्ने ठानें । सकेको पहल गरें । पुस्तक समीक्षार्थ भन्दै नहिंड्ने, कसैलाई पुस्तकबारे लेखिदिनुहोस् भनी अनुरोध नगर्ने स्वभावका महेश थापाका लागि कतिपय अग्रज समालोचक/प्राध्यापकहरूलाई मैले आफै अनुरोध गरें । अनुरोधले साहित्यको विकास हुन्छ भने किन नगर्ने भन्दै पहल गरिरहें । यस मामिलामा अग्निचक्र सधैं सकारात्मक बनिरह्यो । त्यसकारण पनि मलाई साहित्यिक ऊर्जा मिल्थ्यो ।

सन् २०१६ को साउन १२ देखि सन् २०१७ माघ ५ गतेसम्म धनुषाको फूलगामास्थित गिरिजा उमाविमा रहँदा पनि शिक्षण चिन्तन र साहित्यको प्रवर्द्धनमा नै म समय खर्चिन्थें ।

समय बदलियो सन् २०१७ को फेब्रुअरी ९ तारिख सोमबार ९ बजे कतार एयरवेजको भऱ्याङबाट नेपाल आमासँग बिदा माग्दै सात समुद्रपारि जानुपऱ्यो । कर्मको खोजीमा । परिवारको भविष्य भन्दै पश्चिमा मुलुकमा सेवा गर्न पुगियो । त्यस क्रममा अग्निचक्रका सम्पादक भट्टराईसँगको सम्पर्क टुट्यो । किनभने म विदेशी भूमिमा आफ्नो खुट्टा टेक्न सङ्घर्षरत थिएँ ।

साहित्यको सेवामार्फत नाम, प्रसिद्धिको चाहना बोकेको म अर्थात् विमल अधिकारीले यो सोच्यो कि भौतिकवादमा रमाइयो/हराइयो भने आफ्नो भाषा-संस्कृति-साहित्यको उत्थान नहुन सक्छ... सकेको गर्नुपर्छ... जन्मभूमि-आमाको सेवा गर्नुपर्छ । नेपाली भाषा-साहित्यको लेखन-प्रवर्द्धनले मात्र मेरो नाम र प्रसिद्धिको क्रमशः विस्तार व्याप्ति हुन सक्छ । अतः पुनः सामाजिक सञ्जालमार्फत अग्निचक्रसँग जोडिएँ- सन् २०१७ अन्तिमतिर ।

वि.सं. २०७४ को माघ १९ शुक्रबारका दिन उच्च रक्तचाप एवं स्ट्रोकका कारण पाटन हस्पिटलमा मनु ब्राजाकीको निधन हुन पुग्छ । नेपाली साहित्यका लागि अझै २५/२६ वर्ष सेवा गर्छु भनी चाहना राख्ने ब्राजाकीको निधनपछि पुनः मेरा कलम चल्न थालें । मेरो साहित्यका आदर्श व्यक्तित्व मनुका लागि पत्रसाहित्य लेखें- फेब्रुअरी २५, २०१८ मा 'मनु ब्राजाकीलाई चिठी' सन् २०१८ मार्चमा छापियो अग्निचक्रमा । क्रमशः अग्निचक्रमार्फत आफ्ना संस्मरणहरू ' कोलोराडोस्थित ग्यास स्टेसनमा आगो लाग्दा (जेठ २०७५) 'सिसिफसको पाताल प्रवेश' (मंसिर २०७५) शालीन दार्शनिक मदनमणि माङसाहेव (२०७५) छपाएँ । समाज रूपान्तरण र स्वान्त सुखायका लागि पनि लेखन-चिन्तनमा लागिरहें । सन् २०१८ को अन्ततिर अग्निचक्रको आजीवन सदस्य बनें किनभने अग्निचक्र मेरो साहित्यिक साथी बनिसकेको थियो ।

## निःस्वार्थ साहित्य सेवामार्फत देशका लागि योगदान दिने लक्ष्य

त्यस क्रममा मैले अग्निचक्रमार्फत् पुस्तक समीक्षामा पुनः हात हालें । वि.सं. २०७५ को चैत अंकमा गोविन्द गिरी प्रेरणाद्वारा लिखित 'लिभिङ टुगेदर' उपन्यासको पुस्तक समीक्षा छपाएँ । त्यहीं अंकमा आदरणीय मित्र एवं मेरा साहित्यिक गुरू रवीन्द्र भट्टराईद्वारा समीक्षा गरिएको मनु ब्राजाकीको काँडाको फूलहरू गजल संग्रह (२०५६ : साझा) को लेख छापियो ।

वि.सं. २०७६ वैशाख अंकमा मैले पहल गरेर गोविन्द गिरी प्रेरणा र खेमनाथ दाहालको सनसनीपूर्ण अन्तर्वार्ता अग्निचक्रले छाप्यो । खेमदाइको तर्कपूर्ण अन्तर्वार्ता पढेर पाठक प्रभावित बनेको थाहा पाइयो । गिरीको अन्तर्वार्तामा पनि पाठक प्रतिक्रिया राम्रो पाइयो । सम्पादक भट्टराईले मेरो साहित्यिक प्रस्तावलाई कहिल्यै नाइँ भनेनन्... इन्कार गरेनन् ।

वि.सं. २०७६ जेठ अंकमा महेश थापाको अन्तर्वार्ताका लागि योजनासहित सम्पादकलाई आइडिया दिएँ । अग्निचक्रको उक्त अंकमा मैले नकुल स्मृति दिवसको रूपमा 'नकुल सिलवाललाई चिठी (पत्र साहित्य) लेखी साहित्यिक गतिविधि बताएँ । उक्त अंकको महेश थापाको अन्तर्वार्ता साहित्यिक वृत्तमा निकै सनसनीपूर्ण बन्यो । तर्कपूर्ण, सटीक एवं मार्मिक अन्तर्वार्तादाता महेश र अन्तर्वार्ताकार सम्पादक भट्टराईलाई सबैले धन्यवाद दिए । मैले पनि महेश थापाजस्तो प्रतिभा भएको सर्जकलाई प्रकाशन एवं प्रवर्द्धन गर्ने अग्निचक्रलाई धन्यवाद दिएँ । अहिले पनि पत्रिकामार्फत म साहित्यको प्रवर्द्धन गरिरहेको छु । मलाई कुनै शुभलाभ एवं स्वार्थ छैन र हुनेछैन । निःस्वार्थ साहित्य सेवामार्फत देशका लागि योगदान दिने नै मेरो लक्ष्य हो ।

वि.सं. २०६६ देखि आजसम्म अग्निचक्र पत्रिकाले निरन्तरता पाइरहेको छ । त्यो ठूलो कुरा हो । पत्रिका चलाएर कतिपय स्थिर नभएको अवस्थामा सम्पादक एल एन भट्टराईले असार, २०७६ मा सय अंक विशेषाङ्क निकाल्न लागेकोमा खुसी लागेको छ । सुरूका भेटमा व्यापारिक/वैज्ञानिक प्रकृतिको पत्रिका होला, बटुलबाटुल गर्ने खाले सम्पादक होलान् भन्ने लाग्थ्यो । तर सम्पादक भट्टराईले मेरो अनुमानलाई गलत सावित गरिदिएका छन् ।

साहित्यिक वृत्तमा दिनप्रतिदिन अग्निचक्र प्रेसित एवं नाम लिने लायकको बनेको छ । यो पनि अग्निचक्रका लागि उपलब्धि नै मान्नुपर्छ । 'क' वर्गको पत्रिका, साजसज्जा, गुणस्तर कागज, छपाइ एवं साहित्यको प्रवर्द्धनमा जोड नै अग्निचक्रको विशेषता हो । सम्पादक भट्टराई स्वयं पनि साहित्य र पत्रकारिताका विद्यार्थी भएको एवं पत्रकारितालाई नै जीविकोपार्जनको माध्यम मानी दृढ संकल्प बोकेको सम्पादक/पत्रकार भएकाले निरन्तर लागून् भनी कामना छ ।

अन्तमा, अग्निचक्रले सबै विधालाई समेटोस्... नवआन्तुकलाई स्थान देओस् । व्यापारिक प्रयोजनसँगै साहित्यको प्रवर्द्धन पनि गरिरहोस्... जीविकोपार्जनको माध्यम पत्रिकाबाट कति पनि विचलित नहोस्... । साथै आगामी दिनहरूमा पनि अग्निचक्रले सधैं झैँ स्रष्टा/सर्जकहरूलाई थोर/बहुत जे जति सकिन्छ लेखकलाई पारिश्रमिक दिन सकोस्... सर्जक/लेखक/समीक्षक/समालोचकलाई सम्मान दिईरहोस् भनी शुभकामना व्यक्त गर्दछ । सम्पादकको साहित्य प्रवर्द्धन गर्ने यस्तो चिन्तनलाई धन्यवाद । सबैको मित्र बन्दै सत्कार्य गरिरहन अग्निचक्र टिमलाई बधाई दिन चाहन्छु । –**विमल अधिकारी**, हाल : अमेरिका ।

# कानुनी शासनको रकमी कार्यान्वयन



रवीन्द्र भट्टराई

केही समयअगाडिको कुरा हो- चिकित्सा शिक्षा विधेयकका विषयमा प्रतिनिधिसभामा प्रतिपक्षी दल नेपाली काङ्ग्रेसले सरकार र गोविन्द केसीको सम्झौताको विधेयकमा गर्नुपर्ने सम्बोधनका सन्दर्भमा प्रधानमन्त्रीलाई प्रश्न गरिरहेको थियो । प्रधानमन्त्रीले प्रतिनिधिसभामा उत्तर दिएका थिए: "सरकारले सम्झौताबमोजिम नै विधेयक प्रस्तुत गरेको हो अब विधेयक संसद्को कार्यक्षेत्रमा छ । कानुनको शासनमा सबै कानुनका मातहतमा छन् सरकारले संसद्लाई निर्देश गर्न सक्दैन अनुरोध मात्र गर्न सक्छ" । आहा ! कति सुन्दर उत्तर थियो त्यो । त्यसले कानुनी शासन र यसको कार्यान्वयनतिर घोत्लिन प्रेरित गरेथ्यो ।

"लोककल्याणकारी राज्यव्यवस्था कानुनबाटै निर्माण, सञ्चालित र नियमित हुन्छ" आधुनिक लोकतन्त्रको आदर्श यही हो । राज्य वा सार्वजनिक निकायमा काम गर्ने हरेक मानिसहरु नागरिकहरुको कल्याणका लागि काम गर्दछन् । राज्य मूल अभिभावक हो र राष्ट्रसेवक त्यसका कर्तापात्र हुन् र तिनले हरेक काम कानुनबाट बाँधिएर गर्छन् भन्ने विश्वासमान (वास्तवमा त भ्रम हो) नै यो आदर्शको चुरो हो । देशको कानुनी शासनको कार्यान्वयनका आलोकबाट नमुनाका रुपमा कानुन कार्यान्वयनका केही पक्ष औंल्याई हेरौं ।

कुरा व्यवस्थापिकाभित्रको शासनबाट सुरू गरौं । व्यवस्थापिका-संसद्मा २०७४ वैशाख १७ गते तत्कालीन प्रधानन्यायाधीश सुशीला कार्की विरूद्ध महाअभियोग लगाउने प्रस्ताव दर्ता भयो । महाअभियोग प्रस्ताव रोक्न सर्वोच्च अदालतमा रिट निवेदन परेपछि न्यायाधीश चोलेन्द्रशमशेर जबराले कारबाई रोक्न आदेश दिए र न्यायाधीशले प्रधानन्यायाधीशलाई काममा फर्काए । २४९ सभासद्बाट दर्ता भएको महाअभियोग प्रस्तावमा जेठ १४ गते पुग्दा प्रस्तावकमध्येका मीन विश्वकर्मा र टेकबहादुर बस्नेतले फिर्ता लिने निवेदन दिए । महाअभियोगको आरोप दुई जनाले फिर्ता लिएपछि सामसुम बनाइयो । अपराध गर्नेलाई अभियोग लाग्छ, महाअपराध गर्नेलाई लाग्ने महाअभियोग हो ।

शब्दगत रुपमा सामान्य मानिसले पनि यति कुरा सजिलै बुझ्छ । भन्नु पर्दैन अदालतबाट दोषीप्रमाणित नभएसम्म अभियोग लागेको मानिस निरपराधै मानिन्छ । अपराधको अभियोग फिर्ता लिन सरकारले अदालतको अनुमति लिनुपर्छ अनेक जटिल प्रक्रिया पूरा गरेर ।

महाअभियोग हल्कै लाग्यो, हल्कै अदालती आदेशबाट निस्तेज भो र निर्णय गर्नुपर्ने निकायबाट सामसुम भो । यो होस् वा हामीलाई झुक्याएर शिक्षा ऐनमा संशोधन भएछ भनेर नेपाली काङ्ग्रेसका संसदीय दलका नेता शेरबहादुर देउवाले भनेको सन्दर्भ होस्- हाम्रो संसदीय कानुनी राजका प्रतिनिधि घटना त यस्तै न छन् । के भन्ने होला यस्तो कानुनी राजको संसदीय कार्यान्वयनलाई ?

कार्यपालिकीय कानुनी राजको पनि उदाहरण हेरौं ? नेपालमा संघसंस्थाको दर्ता गर्ने जिम्मा कानुनहरुले अनेक अधिकारीलाई दिएका छन् । राष्ट्रिय निर्देशन ऐन, संस्था दर्ता ऐन, सहकारी ऐन, कम्पनी ऐन आदि त संस्थाको नियमनकै लागि भैहाले । समाज कल्याण परिषद्ले पनि नियमन नै गर्छ संस्थालाई । स्थानीय तहले त सबै निगरानी नै गर्ने भैगयो । कम्पनी, सहकारी, साझेदारी फर्म, घरेलु उद्योग दर्ता गर्नलाई नागरिक भए पुग्छ । गैरसरकारी संस्था दर्ता गर्नलाई त्यसले पुग्दैन र चाहिन्छ संस्था दर्ता गर्ने मानिसहरुको पुलिस रिपोर्ट । त्यो पुलिस रिपोर्ट पनि विदेश जाँदा लगिने निजको कुनै फौजदारी अभिलेख नदेखिएको भन्ने बेहोराको हैन, पूरा खुफियागिरीको प्रतिवेदन ।

पञ्चायत कालमा लोक सेवा पास गरेमा नियुक्ति भएको व्यक्तिको गोप्य पुलिस रिपोर्ट लिइन्थ्यो र पञ्चायत व्यवस्थाविपरीत विचार राखेको भनेर पुलिस रिपोर्ट आएपछि जागिरबाट निकालिन्थ्यो । हो, त्यही ढाँचामा बुझिन्छ पुलिस रिपोर्ट गैरसरकारी संस्था दर्ताका लागि निवेदन दिनेको । कर्मचारीको पुलिस रिपोर्ट लिने परम्परा त २०४६ सालको परिवर्तनले टुटायो तर संस्था दर्ता गर्ने जिल्ला प्रशासन कार्यालयले त्यही शैली बिउँताएथ्यो राजा ज्ञानेन्द्रले सत्ता लिएपछि । कानुनी राजको प्रशस्तीगायक प्रधानमन्त्रीका पालामा पनि त्यो जिउँका त्यूँ छ । उहाँका शासनकालभर त्यो टसमस गर्दैन होला । सम्बन्धित ऐनका प्रावधान यसो हेऱ्यो: पुलिस रिपोर्ट लिनुपर्ने वैधानिक व्यवस्था कतै छैन ।

यो त एउटा उदाहरण न भो, विभिन्न मन्त्रालय, विभाग, निर्देशनालय र कार्यालयमा यस्ता कानुनमा नलेखिएका र कानुनी राज्यको अवधारणा नसुहाउने व्यवहार कति छन् कति । राजश्व कार्यालयमा बुझाउने राजश्वसम्बन्धी कुनै निवेदन दर्ता गर्नुपरेमा राजश्व रकम (सय, हजार, लाख, करोड होला) बैंकमा जम्मा गर्नू भनिन्छ अनि निवेदनमा रू १० को हुलाक टिकट टाँस्न लाएर रद्द गर्न लगाइन्छ । पहिलो कुरा, त्यो निवेदन दस्तुर लाग्छ भन्ने कुनै कानुनी व्यवस्था छैन, दोस्रो कुरा त्यो निवेदन दस्तुर पनि बैंकमै जम्मा गरेगराए हुँदैन ? तर राजश्व-अधिकारीहरु भन्छन् हुँदैन, टिकटै टाँस्नुपर्छ, टिकटै रद्द गर्नुपर्छ किनभने नेपालमा कानुनी शासन छ नि त !

एनसेलको लाभकरछली प्रकरणलाई सम्बोधन गर्दै कर असुल्न सरकारका नाममा भएको परमादेशबाट हाम्रो न्यायपालिकाको छवि निकै उज्यालो भएको छ । तथापि, न्यायपालिकाका पनि कानुनी शासनका नाममा अनेकन अकानुनी हर्कत नहुने गरेको कहाँ हो र ? फौजदारी कसुर गरेको आशङ्कामा नेपाल प्रहरीले दिनहुँ जिल्ला अदालतमा शङ्कित व्यक्तिहरु प्रस्तुत गर्छ । संविधानले पक्राउ परेको व्यक्तिलाई चौबीस घन्टाभित्र मुद्दा हेर्ने अधिकारीसमक्ष पेस गर्नुपर्ने व्यवस्थाले प्रहरीले यसरी अदालतमा प्रस्तुत गरेको हो ।

यसरी प्रस्तुत गरेको व्यक्तिलाई मुद्दा हेर्ने अधिकारी (न्यायाधीश) समक्षै प्रस्तुत गरेर न्यायाधीशकै आदेशले मात्र थुनामा राख्ने भनेरै संविधानले भनेको हो । तर न्यायाधीशले कुन कानुनको उल्लंघनवापत पक्राउ गरिएको हो भनेर कारणसमेत सोधेर थुनामा पठाएका घटना बिरलै होलान् । अनुसन्धानको अवधिभरको म्याद थपको कुरामा पनि उही बिरालो बाँध्ने न हो, संविधान र कानुनको अक्षर र भावना त कहाँ जीवन्त पारिन्छ ? एउटा कानुनअन्तर्गत मुद्दा लाग्ने कुरामा अर्को कानुनअनुसारको अभियोजन कारण देखाएका आधारमा मुद्दा हेर्ने अधिकारीले पक्राउ परेको मानिसलाई थुनामुक्त गरेका कुनै उदाहरण छन् र ? कानुनको राजमा त एउटा कानुनअन्तर्गतको कसुरमा अर्को कानुनअन्तर्गत दाबी गर्न पाइन्न नि पाउन त !

संविधान भन्छ : पक्राउ परेको व्यक्तिलाई पक्राउ परेकै समयदेखि कानुनव्यवसायीबाट पुर्पक्ष गर्ने हक हुन्छ र कानुनव्यवसायीसँग त्यस्तो व्यक्तिले गरेको परामर्श सरसल्लाह गोप्य हुन्छ । नेपालभर मानिस पक्रेर थुन्ने हिरासत र कारागार छन् । ती कुनै संरचनामा त्यस्तो व्यक्ति र कानुनव्यवसायीबीच गोप्यतापूर्वक कुराकानी गर्ने बन्दोबस्तै छैन । अन्तर्राष्ट्रिय कानुन भन्छ : कानुनी परामर्शस्वरुप हुने यस्तो कुराकानी कानुन कार्यान्वयन गर्ने अधिकारीले देख्न सक्ने तर कुराकानी सुन्नचाहिँ नसक्ने किसिमको बन्दोबस्तीमा हुनुपर्छ ।

अब, हिरासत र कारागारको कुरा छाडिदिऊँ । कानुनी परामर्शका लागि सबैभन्दा सहज हुने र हुनुपर्ने ठाउँ अदालत हो । पक्राउ परेपछि मुद्दा हेर्ने अधिकारीसमक्ष प्रस्तुत गर्दा र अनुसन्धानका लागि थुनामा म्याद थप गर्दा वकिल र पक्षबीच भेटघाट र सरसल्लाह गर्ने सबैभन्दा उपयुक्त समय हो ।

न्यायका लागि पक्ष र वकिललाई यस्तो संवाद गर्न गराउन अदालतले उत्प्रेरित गर्नुपर्छ किनभने ऊ कानुनको व्याख्याता मात्र हैन पक्षको हकको अन्तिम संरक्षक पनि हो । हो नि हुन त ! तर के गर्नु र ? नेपालका कुनै पनि अदालतमा पक्ष र कानुनव्यवसायीबीच परामर्श गर्ने कुनै स्थान निर्धारित पनि छैन र भौतिक बन्दोबस्ती पनि छैन ।

संविधानले किटान गरेको हक रक्षाका लागि न्यायपालिकाले आफ्नै कर्मथलामा चाहिँ यस्तो व्यवस्था गर्नै नपर्ने ? अदालतले कानुनबमोजिम गर्ने भनेको आदेशमा लेख्ने कुरा मात्र हुन् कि भौतिक बन्दोबस्तीबाट पनि कानुनको राज देखिनुपर्छ ? यी उदाहरणलाई सयकडाका हिसाबले हैन हजारकडाका हिसाबले मात्र बुझ्नुपर्छ, लिनुपर्छ ।

कानुनको कार्यान्वयन गर्ने जिम्मा पाएका राज्यका अधिकारीहरु! यहाँहरुलाई कानुनको शासन र कानुनका सीमा भन्दिनलाई सजिलो छ । नागरिकहरु राज्यका अधिकारीहरुले अर्थ्याएअनुसारको आज्ञा पालन गर्न विवश छन् । कानुनको राज भनेको त त्यस्तो राज्य हो जहाँ नागरिक र नागरिकबीचका सबै सम्बन्धहरु कानुनअनुसार चल्छन् ।

राज्यका हरेक अङ्ग र निकाय आमजनताप्रति उत्तरदायी भएर हरेक बिन्दुमा हरेक नागरिक (चाहे ती पीडित पक्ष हुन् वा आरोपित पक्ष हुन्) को आधारभूत मानवअधिकार (जीवन, मर्यादा, समानता र स्वतन्त्रता) को सम्मान, संरक्षण र परिपूर्तिमा सन्तुलित संवेदनापूर्वक दत्तचित्त भएर क्रियाशील हुन्छन् । छ त हाम्रो राज्यतन्त्रमा यस्तो क्रियाशीलता ? यसो पक्कै छैन किनभने नेपाल राज्य कानुनी राज सिद्धान्ततः भनिने हो व्यवहारतः यो कानुनी हैन रकमी राज नै हो ।





ठाकुर शर्मा भण्डारी




## शुभकामना कविता

इतिहास यहाँ मिल्छ वर्तमान डोऱ्याउने
भविष्यको छ सोचाइ समाज यो चलाउने
'अग्निचक्र' बनेको छ भाषा-साहित्यको गति
प्रत्येक अङ्गमा मिल्छ सौन्दर्य साथ सम्मति ।१।

अन्तर्वार्ता चलेको छ राजनीति समाजको
कानून सबको भाका अध्यात्मिक विचारको
अन्तर्राष्ट्रिय सम्बन्ध राष्ट्रिय भावनाहरु
यो 'अग्निचक्र'ले छुन्छ मानवी चाहनाहरु ।२।

साहित्य-सिर्जनाभित्र नित्य नवीन छन् कुरा
नयाँ खुलाउने मार्ग देखाउने पुरा कुरा
आफ्नो संस्कृति-संस्कार सहअस्तित्व भावमा
सत्यको मार्गमा हिँड्दै 'अग्निचक्र' छ साथमा ।३।

सयौँको रङमा खुल्दा नैरन्तर्य छ साथमा
जनको मनको भाव खेलाई गर्छ साधना
सम्पादनको अस्तित्व भाषामा देख्न मिल्दछ
अनेकौं रङका फूल फुले झैं 'अग्निचक्र' छ ।४।

भाषामा शक्ति होस् यस्तो अभिन्न कर्म सत्यको
देशको गरिमा बढ्ने रुप होस् 'अग्निचक्र'को
भावी जीवनको रुपको अझै स्वस्थ बनी चलोस्
भाषा-साहित्यको सेवा स्वच्छन्द रुपमा खुलोस् ।५।

विभिन्न भाव भित्र्याई विषय विविधामुखी
निर्मल गण्डकी धारा सेवा होस् जीवनैभरी
दशौं वसन्त भो पार मधुर रस-भावमा
चलोस् सुन्दरता भर्दै बधाई शुभकामना ।६।

# भाले प्रश्न



विमेज

अग्निचक्रमार्फत् एउटा प्रश्न गर्न मन लाग्यो केही लेखेर ।

हिजो याने प्राग इतिहासकालमा प्राकृतिक सबै जीव सरह मानव पनि प्राकृतिक तवरले बाँचेका थिए । केही उत्पादन गर्न जानेका थिएनन् । थुपारेर भण्डारण गर्न जानेका थिएनन् । विचारवाद केही थिएन । धर्म (अलौकिक) जन्मेको थिएन । पितृसत्तात्मक समाज जन्मेको थिएन । मानव समाजमा सबै एक आपसमा मिलेर बाँच्नको लागि सबैले एक अर्कालाई भरपुर कोशिस गर्दथे ।

क्रमशः कृषियुगको समय आएपछि बुद्धि र बल भएका पुरूषहरूले कृषिका लागि आवश्यक जनशक्तिका लागि धेरै-धेरै श्रीमतीहरू राख्न थाले । धेरै बच्चाहरू जन्माउन थाले । बलिया र बाठा कमै बने कमजोरहरू दास बने । लडाइमा हारेकाहरू पनि दास बने ।

मालिकले आफ्नो सम्पत्तिको रखवाला हकदार छोराहरूलाई बनाए । राजाले आफ्नै छोरालाई राजा बन्ने अधिकार दिए । छोराको दाँजोमा छोरीहरू कमजोर बन्न थाले । पितृसत्तात्मक समाज बन्यो र आज पनि त्यसकै बोलवाला छ ।

लडाइमा पनि छोराकै आवश्यकता पऱ्यो । घर बहिर काममा पनि छोराकै आवश्यकता र जरूरत पऱ्यो । पुरा समाज छोराकै भर पर्न थाल्यो ।

छोरा मान्छे नै ठूला भगवान् बन्न थाले । छोरा मान्छे नै दार्शनिक, वैज्ञानिक, कलाकार, इतिहासकार, साहित्यकार आदि बन्न थाले । धर्मशास्त्र पनि छोरामान्छेले लेख्न थाले । विविध विषयको विज्ञ पनि प्रायः छोरामान्छे नै बन्न थाले । छोरा मान्छेका मन मस्तिष्क नै सबै विषयमा हावी हुन थाल्यो । छोरी मान्छेको यथार्थ मन मस्तिष्क कुनै पनि विषयमा छिर्न पाएन । छोरा मान्छेको सारतत्व जति मिलेर विषयहरू जन्मिन त जन्मिए तर छोरी मान्छेको सारतत्व नहुनाको कारणले सबै विषय लंगडो बन्न पुग्यो । हिसाबमा पाइको भ्यालु ३.१४१४१४ भयो भने विज्ञानमा मर्चुअल रियालिटी वा प्रोवेवालिटीमा भर पर्नु पऱ्यो । राजनीतिमा जाने प्रायः राष्ट्रको महत्वपूर्ण पदहरूमा ती सबै छोरा मान्छे नै हावी थिए, छन् र आफ्नै भविष्यमा पनि त्यस्तै देखिन्छ ।

प्रायः संसारभरका हरेक परिवारको पहिलो प्राथमिकता कोरा नै देखिन्छ । संसारभर छोराकै माग भएकाले छोराको जनसंख्या कम हुँदै गएको छ । भारत, चीन र हाम्रै तराइ क्षेत्रमा छोराको विवाहको लागि कन्या पाउन मुस्किल भइसक्यो । चेत खुल्ने कहिले हो ?

बल्ल आज मेरो चुरो प्रस्तावको समय आउने बेला भयो । प्राय पृथ्वीमा रहेका जति जति स्तनधारी प्राणी छन् ती परिवारमा भाले कम र पोथी धेरै देखिन्छ । जस्तै गाई धेरै साँढे कम, बाख्रा धेरै बोका कम, पोथी मृग धेरै भाले मृग कम, गधैनी धेरै गधा कम, बघिनी धेरै बाघ कम आदि । संसारचक्र करोडौं वर्षदेखि एकनास चलेर आइरहेको छ । तर मान्छेमा भाले र पोथी बराबर गर्ने विचार किन जन्मियो ? के यो मान्छे पनि सबै स्तनधारी जनावर मध्येकै एक उच्च श्रेणीको जनावर होइन र ? के मान्छेको जातिमा भाले र पोथी बराबर हुनु के साच्चै प्रकृतिको खिलाप त भएको छैन ? के लोग्नेमान्छे स्वास्नीमान्छेको दाँजोमा कम संख्यामा हुनु पर्दैन र ? के यस प्रकारले अनुसन्धान गर्नु अबेला भइसकेन र ?

लडाइ गर्ने लोग्ने मान्छे, आणविक हतियार बनाउने लोग्ने मान्छे, प्रकृति नै विनास हुने गरी बम बनाउने लोग्नेमान्छे, विनास गर्ने लोग्नेमान्छे, पेट्रोल जति रित्याएर पृथ्वी भित्र ठूल्ठूलो प्वाल पार्ने लोग्नेमान्छे, विभिन्न खानी रित्याउने लोग्ने मान्छे, खोलानाला तालतलैया सागर प्रदूषित बनाउने लोग्नेमान्छे ? सिकार खेल्ने र वन विनास गर्ने लोग्नेमान्छे, प्रकृतिको दोहन गर्ने लोग्नेमान्छे, धर्म भड्काएर युद्धमा होम्ने लोग्नेमान्छे, हातहतियार उत्पादन गरेर युद्धमा उक्साउने लोग्नेमान्छे । जातजाति बीच घृणा रोप्ने लोग्नेमान्छे, भूगोल-भूगोलबीच द्वन्द्व रोप्ने लोग्नेमान्छे ।

अन्त्यमा म कुनै यस विषयको विज्ञ होइन, मनमा धेरै वर्षदेखि उठिरहेको प्रश्न छलफलको लागि उठाउन मात्र खोजेको हुँ । कसैलाई अप्ठ्यारो पार्ने नियतले यो निर्देशित हैन । यदि कसैलाई त्यस्तो लागेमा म क्षमा चाहन्छु ।

# मौन छ मन र मुटु

विनयकुमार शर्मा नेपाल

आकाश मौन भएको छ
मात्र शब्द छ
बाँकी सबै मौन छ
तर 'शब्दसागर' बोलेको छ
र बोलिरहने छ ।
नेपाली भाषा, साहित्य र शिक्षाको
निरन्तर सत्तरी वर्षको कठोर साधना
हजारौं हजार
म जस्ता शिष्य र सन्तति जन्माउने
एउटा सूर्य आज मौन भएको छ
एउटा गुरू आज मौन भएको छ
लिनु र दिनुको गर्भ सम भनेर बुझेपछि
पीडाको मर्म इच्छा भनेर जानेपछि
कसैबाट कुनै आशा नराखेपछि



लोभ र लालच विलिन भएर
स्वार्थ निशेष हुन्छ
अनि
मान्छे कठोर र निर्भीक बन्छ
एक किसिमको पत्थर बन्छ
र ऊ निरन्तर
स्वार्थीलाई नपच्ने सत्य बोल्छ
तर
आज त्यही निर्भीकता पनि मौन छ
त्यसैले आज मेरो लागि
धरती मौन छ
आकाश मौन छ ।
तर सावधान !
बाँचेर पल पल मर्नु मृत्यु हो
मरेर वा बाँचेर
पल पल बाँच्ने कर्म गर्नु
मृत्यु होइन
काल जित्नु हो
जीवन्त बन्नु हो
मरेर युग युग बाँच्नु हो ।
त्यसैले
सावधान !
उहाँ अझै हामी माझ नै हुनुहुन्छ
दर्जनौं दर्जन स्कुल र कलेजमा
दर्जनौं दर्जन सामाजिक संस्थामा
सयौं कृति र लाखौं शिष्यमा
शब्द शब्दमा
तत्त्व तत्त्वमा ।

*अग्निचक्रसँग सचेत शिक्षासेवी/समाजसेवी (खगेश्वर अधिकारी र दुर्गादेवी अधिकारी) दम्पत्ती*

# युवाले प्रौढको अभिज्ञता र प्रौढले युवाको दृष्टिकोणलाई सम्मान गर्न सक्नु पर्छ



**तपाईहरुको आफ्नो परिचय दिँदै हालको दिनचर्या कसरी चल्दैछ नि ! भन्दिनुहुन्छ कि ?**

पुर्ख्यौली घर इलाम र जीवनको हालको अवस्था अर्थात शिक्षक पेशाबाट निवृत्त हुइन्जेल म इलामको स्थायी बासिन्दा हुँ । खगेश्वर अधिकारी भनेर मैले आफ्नो नाम लेख्ने गरेको छु (मेरी श्रीमती दुर्गादेवी अधिकारी) भने शैक्षिक क्षेत्रबाट विद्यार्थी, अभिभावक र मैले शिक्षण गरेका शैक्षिक संस्थाहरू सबैतिरबाट चार दशकभन्दा लामो अवधिसम्म प्रत्यक्षमा मप्रति कुनै गुनासो आएको पाइन ।

यस पक्षको प्रष्टसँग सम्बन्धित क्षेत्रमा रहेका सरोकार भएका मेरा इष्टमित्र नै भन्न सक्नु हुन्छ किनभने आफ्नो मूल्याङ्कन आफैले गर्न मिल्दैन तापनि मलाई आफू एक सफल शिक्षक हुँ भन्ने क्षेत्रमा रहँदै समाज र सामाजिक हितको काम केही गर्न सकिन्छ कि ! भन्ने तर्फ सधै सचेत रह्यौं ।

यसैले होला हामी दुवै (श्रीमान-श्रीमती) एक रथका दुई शक्तिशाली पाङ्ग्रा हौं ।

यो समयमा हामी एकवर्ष देखि काठमाडौंको जीवनशैलीमा अभ्यस्त हुने प्रयास गर्दैछौं । इलाममा आफ्नो इलम रहुन्जेल दुवैजनाले सह-जीवनको सहजताका लागि आफ्नै प्रकारको नियमित दिन चर्या बनाएका थियौं ।

बिहान उठेपछि देखि बेलुका ओछ्यानमा जाने बेलासम्ममा धेरै-थोरै गाई-वस्तु, खेतीपाती, इष्टमित्र, पाउना पाछा सबैतिर नजर पुऱ्याएर नित्य नैमित्तिक धर्म-संस्कारका कर्महरू समेतको दिनचर्या पालन गरेकै हौं ।

त्यसका साथै हाम्रो देश राजनीतिक हिसाबले पनि अस्थिर रहेको हुनाले समाजमा आफ्ना तर्फबाट सामाजिक-राजनीतिक कदममा चासो लिँदै सकेको र भ्याएको भरथेकमा लाग्नु कर्तव्य नै हो भन्ने ठानेर जनताको प्रजातान्त्रिक हक-अधिकार तर्फ विचार-विमर्श पनि गर्दथ्यौं र गर्दै पनि छौं । त्यसैले जागिरे अवस्थामा पेशागत संगठनमा संगठित भएर पनि लामो समय आफ्ना विचारहरू अघि सार्ने प्रयत्न गरेका छौं ।

**आफूलाई शिक्षक र प्रजातान्त्रिक राजनीतिको पक्षमा रहेको कुरा गर्नु भो, आजको नेपाललाई हेर्दा ती दुवैपक्षमा कति सफल देख्नु हुन्छ ?**

यस प्रश्नमा दुई वटा मुख्यपाटाहरू देखापरे । पहिलो पाटा शिक्षा हो । शिक्षाका क्षेत्रबाट हेर्दा मैले आफूलाई सफल शिक्षक मानेपनि देशमा हालको विद्यमान शिक्षा सफल छैन किनभने शिक्षाले समाजलाई सकारात्मक परिवर्तन गराउन सक्नुपर्छ । शिक्षक सफल हुनका लागि उ निश्छल र सरल व्यवहारको हुनुपर्छ । शिक्षकले छल्यो भने देश डुब्छ । हामीसँग त्याग र सरलपन भएकै कारण शिक्षण पेशामा सफलता पाएका हौं । त्यसको प्रमाण हाम्रा प्रमाणपत्रहरू तथा सम्मानपत्रहरू स्वयं बोल्दैछन् । श्री अमर उच्च माध्यमिक विद्यालय, बरबोटे इलामले दिएको दीर्घ सेवा सम्मानपत्र, नेपाल शिक्षक संघ इलामबाट पाएको सम्मानपत्र, जिल्ला शिक्षा कार्यालय इलामबाट प्राप्त प्रशंसापत्र, नेपालटार माध्यमिक विद्यालय साखेजुङबाट पाएको सम्मानपत्र लगायत थुप्रै संघ-संस्थाबाट हामीले पाएको सम्मानपत्र हेर्दा हामी त सफल भएको देखियो नि, हैन र ! यति भन्दा भन्दै देशको शिक्षा नीति सफल छैन भन्नै पर्दछ । किनभने शिक्षित युवा देशबाट पलायन भएका छन् । हामीले आफ्ना देशमा शिक्षित जनशक्ति तयार गर्छौं तर त्यसबाट विदेशीले सु-शिक्षित कामदार पाउँछ । हामी अर्काको बाछो चाटेर हस्स परेजस्ता छौं ।

**शिक्षाले सबै शिक्षितलाई व्यवस्थित गर्न नसकेको र प्रजातान्त्रिक राजनीति पनि गणतन्त्रसम्म आइपुग्दा समेत देशको स्थिति सन्तोषजनक नभएको भन्ने तपाईहरुको विचारबाट संकेत पाइयो, यसको सुधार गर्न अब के गर्नु पर्ला ?**

शिक्षालाई स्वरोजगारमा जोड्नु आजको आवश्यकता हो भन्ने हामीलाई लाग्छ । यसका निमित्त व्यावसायीक तथा प्राविधिक शिक्षा अझ शक्तिशाली रूपमा राज्यले अगाडि सार्नुपर्छ । शिक्षित युवाहरूले पनि आफ्नो शिक्षालाई आफ्ना अभिज्ञताले आयमूलक बनाउने प्रयास गर्नुपर्छ । यसलाई हामी स्वरोजगारको चिन्तन भन्दछौं । हुनता स्वरोजगारका नाममा युवाहरूले आर्थिक सहयोग पाउदै गरेको समाचार बेलाबखत सुनिन्छ तर त्यो कति उपलब्धिमूलक हुँदैछ

## इलाम ७अ (आलु, अलैंची, अदुवा, अमृसो, ओलन, अकबरे, अर्ग्यानिक चिया) जस्तो कृषिजन्य उपजद्वारा समृद्ध छ

त्यसको मूल्याङ्कन र सुपरीवेक्षण राज्यका तर्फबाट हुनु राम्रो हो। हामीले स्वरोजगारको चिन्तन भन्नुको आशय शिक्षित जनशक्तिले एकीकृत रूपमा आयमूलक कामको थालनी गरेपछि स्थानीय तहको प्रशासनले आफ्नै निगरानीमा स्रोत-साधनको सहजीकरण गर्दै उत्पादन भएका वस्तुहरूको बजार व्यवस्थापन पनि गर्नमा सघाउ पुऱ्याउनु पर्छ। यसरी युवाशक्ति र राज्यको प्रत्यक्ष सहकार्य हुन्छ। दोस्रो पक्ष राजनीतिको रह्यो।

राजनीति भनेको राज्यलाई व्यवस्थापन गर्ने नीति तथा संयन्त्र हो। हैकम र राजगर्ने स्वेच्छाचारी प्रवृत्तिले राज्य दिनानुदिन व्यापारीकरण हुँदै धराशयी बन्दैछ (अलिकति हासेर...)। राज जति नेताका भागमा र नीति जति जनतालाई लादिएर राजनीति जस्तो पवित्र शब्दलाई घृणित खेलको रूपमा मैलो पारिएको छ। वास्तवमा राजनीतिलाई सेवाका अर्थमा प्रयोग गर्नु पर्ने थियो।

**तपाईहरुले इलामजस्तो सुन्दर र समृद्ध जिल्लामा रहेको चल-अचल सम्पत्तिलाई छोडेर काठमाडौं पस्नुको आशय के हो ?**

हो। इलाम साच्चिकै सुन्दर र समृद्ध छ। हुनत नेपालका हर क्षेत्र, पाइला-पाइला स्वर्गमय छन् त्यसमा हामीलाई चाहिँ हाम्रो इलाम स्वर्गको नन्दन वनजस्तो प्राकृतिक सौन्दर्यले भरिपूर्ण लाग्छ। साथै त्यहाँ उद्यमशील कृषक देवता जस्ता छन्। उनीहरू स्वावलम्बी पेशा-व्यवसायकर्मीहरू भएको कारण आर्थिक अवस्था पनि असाध्यै सुधारउन्मूख छ। यसको उदाहरणका लागि इलाम ७अ (आलु, अलैंची, अदुवा, अमृसो, ओलन, अकबरे, अर्ग्यानिक चिया) जस्तो कृषिजन्य उपजद्वारा समृद्ध छ। जीवनका आरोह-अवरोहहरू विचित्र हुन्छन्। समयसँगै घुम्ती र मोडहरू पार गर्नु पर्छ। अरू हात्तीमा चढेको देखेर हामी धुरी चढ्न खोजेका होइनौं, यसका केही कारण छन्, जेठी छोरी र ज्वाइँ आफ्नो भरसिलो जिविकाको खोजमा काठमाडौ नै लामो समय बस्नु भो।

हुनतः हाल उहाँहरू राम्रो व्यापार-व्यावसाय गरेर दुई नातिनीहरूका साथ झापाको मेची नगरमा सम्पन्न जीवन निर्वाह गर्दै हुनुहुन्छ तापनि काठमाडौ पस्ने साइनो त्यहीँबाट सुरू भयो। अर्को कुरो कान्छी छोरी र छोराको उच्च शिक्षाको क्रम पनि काठमाडौंबाट नै अघि बढ्यो। कान्छी छोरी सु-शिक्षित हुनुका साथै एक कुशल व्यापारी पनि हुन्। आफ्नै व्यापार छ, ज्वाइँ वैदेशिक रोजगारमा हुनुहुन्छ। नाती सानै कक्षामा पढ्दैछन्। छोरो कान्छो सन्तान एमडी गर्दै आफ्नै पेशामा संलग्न छन्। त्यसो हुँदा हामी इलाममा एक्लो हुने भयौं र उमेर अनुसार स्वास्थ्यले साथ नदिंदा छोराछोरीकै नजिक बस्नु पर्ने भयो। पहिलेको जस्तो वस्तुभाउ र खेतीपातीमा खट्न पनि उमेर अनुसार नसकिने भइयो।

**नेपाल गाउँ नै गाउँको देश र कृषि प्रधान देश हो, शहर पसेर गाउँको समृद्धि र कृषिमा टेवा कसरी पुग्ला ?**

अशिक्षित भन्दा शिक्षित किसान प्रभावशाली हुन्छ। शिक्षा मान्छेको अपरिहार्य आवश्यकता हो। शिक्षा पाएका किसानले अब पुरानो गाउँको पद्धति र कृषि प्रणालीलाई नै पछ्याएर देशलाई उँभो लगाउँछु भन्दा सहज नहोला। त्यसैले शहर बस्न रूचाउनेलाई पनि मर्का नपारीकन गाउँका किसानको खेतीयोग्य जमिन एकीकृत गर्दै युवाहरू संगठित हुँदै कृषिलाई औद्योगीकरण गर्ने आधुनिक सोचको अब खाँचो छ। खेतीलाई व्यवस्थित गर्न सक्दा जहाँ बसेपनि बाधा पर्दैन भन्ने हाम्रो धारणा छ।

**युवाहरुलाई र आफूजस्तै प्रौढहरुलाई कुन रुपमा देख्न रुचाउनु हुन्छ ?**

युवाले प्रौढको अभिज्ञता र प्रौढले युवाको दृष्टिकोणलाई सम्मान गर्न सक्नुपर्छ। युवाको जोश-जागरलाई प्रौढले भरोसा गर्नुपर्छ, उरन्ठेउला ठिटा मात्रै भनेर हुँदैन। प्रौढको अनुभव र ज्ञानलाई युवाले पनि म्याद सकिएको भनेर हेप्न मिल्दैन। आज भइरहेको एउटा कमी हो यो। विश्वास र आत्मीयता माथि प्रश्न उठेका कारण नै देश र समाज फितलो भयो। युवा र प्रौढ दुवैथरीले यस कुरामा मनन् गर्दा राम्रो होला भन्ने लाग्छ।

**अग्निचक्रका पाठकहरुलाई अन्तिममा सन्देश के छ ?**

Heads Nepal नामको संस्थामा संलग्न छौं। यस संस्थाको पूरा नाम Health, Education, Agriculture and Development Society हो। संस्थाको कार्यालय वनस्थली चोकमा छ। अग्निचक्र राष्ट्रिय मासिकको अपार उन्नति होस्, लक्ष्मीनारायण भट्टराईजीको कार्यक्षमता अझ सशक्त बनोस् र पाठकबाट आत्मीयता एवं सुझाव पाइयोस्। अस्तु।

*नेपाल आमालाई हिउँफूलकी रानी देख्ने*

# नियात्राकार घनश्याम राजकर्णिकार



प्रा.डा. कृष्णप्रसाद दाहाल




माता प्राणमाया र पिता कृष्णबहादुर राजकर्णिकारको कान्छा छोराका रूपमा घनश्याम राजकर्णिकारको जन्म वि.सं. १९९८ साल माघ ३ गते काठमाडौंको कमलपोखरीमा भएको थियो । अर्थशास्त्र विषयमा एम.ए. सम्मको अध्ययन सम्पन्न गरेका राजकर्णिकारले जीवनमा जस्तोसुकै कठिन परिस्थिति आउँदा पनि हरेस नखाइकन अगाडि बढेको पाइन्छ । पिता कृष्णबहादुर राजकर्णिकारले वि.सं. २००५ सालमा स्थापना गरेको कृष्ण पाउरोटी भण्डारलाई उनले अत्याधुनिक रूपबाट अगाडि बढाउँदै ल्याइरहेका छन् । पिताको अमर कीर्ति कृष्ण पाउरोटी भण्डारलाई जीवन्त राख्न पसलको अगाडि उनै कृष्ण बहादुरको प्रतिमा स्थापना गरेर प्रत्येक नेपालीका बीचमा "यिनैले नै हामीलाई सर्वप्रथम पाउरोटीको स्वाद चखाउन सफल भएका थिए" भन्ने सन्देश प्रवाह गरिरहेका छन् । एकातिर पाउरोटी भण्डारको सुसञ्चालन र अर्कातिर नियात्रा लेखनको कार्यलाई समान किसिमले अगाडि बढाउँदै आएका नियात्राकार राजकर्णिकारका पाँचओटा नियात्रा सङ्ग्रह प्रकाशित भइसकेका छन् : विदेशको यात्रा : स्वदेशको सम्झना (२०३७), देश प्रदेशको भ्रमण (२०४३), बौद्ध तीर्थयात्रा : नालान्दादेखि लुम्बिनीसम्म (२०६०), यात्रा अमेरिकाको : माया नेपालको (२०६९), यात्राको लहरीमा हिउँफूलकी रानी (२०७४) । यस आलेखमा 'यात्राको लहरीमा हिउँफूलकी रानी' नियात्रा कृतिका बारेमा समीक्षात्मक अध्ययन गरिएको छ ।

जसको जीवनको लक्ष्य नै नियात्रा लेख्नु हो; जसको जीवनको सन्तुष्टि नै नियात्रा नै नियात्रामा रमाउनु हो; जसको नियात्रामा राष्ट्रको अभ्यर्चना भइराखेको हुन्छ; त्यसैको नाम हो घनश्याम राजकर्णिकार । नेपाली नियात्रा लेखनमा एकलव्य साधना गर्ने नियात्राकारहरुको पङ्क्तिमा राजकर्णिकारको नाम अग्र स्थानमा पर्दछ । लगभग पचास वर्षदेखि अनवरत रुपमा उनी नियात्रा लेखनमा मात्रै तल्लीन रहेका छन् । अन्य विधागत मोहमा लागेर उनले नियात्रा लेखनलाई बिटुलिन वा बिग्रन दिएका छैनन् । उनको नियात्रा लेखनको विशिष्ट पक्ष भन्नु यही नै हो । यही वैशिष्ट्यले गर्दा नै उनी अठहत्तर वर्षको उमेरमा पनि नियात्रा सङ्ग्रह तयार गरेर प्रकाशन गर्न लागिरहेका छन् । नेपाली नियात्रा साहित्यमा पचहत्तर वर्ष कटेका नियात्राकारहरुले नियात्रा लेखेर प्रकाशित गरेको इतिहास एकदमै थोरै छ । यसमा राजकर्णिकार नै पहिलो व्यक्ति बन्न सफल भएका छन् । यो शुभ अवसरमा म उनीप्रति अभिवादन गर्दछु ।

नियात्राकार घनश्याम राजकर्णिकारको पाँचौं नियात्रा कृतिको नाम हो- 'यात्राको लहरीमा हिउँफूलकी रानी' । वि.सं. २०७४ सालमा प्रकाशित यस नियात्राकृतिभित्र जम्मा नौ ओटा नियात्राहरु समावेश गरिएको छ । प्रत्येक नियात्रामा नवीनताको खोजी गर्दै त्यसमा आफ्नो दृष्टिकोण सहित अनुभूतिको सशक्त सहजीकरण गर्न मन पराउने राजकर्णिकार यस नियात्रा सङ्ग्रहसम्म आइपुग्दा अझ बढ्ता छोइने र पढिने भएर देखापरेका छन् । बाँच्नुको विविधताको नाम नै जीवन हो । उनले जीवनको धरातलबाट बाँच्नुको अर्थ र रमाउनुको तात्पर्य खोजेका छन् । चङ्गाको लट्टाईझैं उनी जीवनलाई नियात्राको धागोमा फोइरहन मन पराउँछन् । चङ्गा मन लिएर नियात्राकाशमा कावा खाइरहन्छन् अनि त्यसको मज्जा पाठकलाई पनि चखाइरहन्छन् । उनले नियात्राका क्रममा प्राप्त गरेका कुरा कतै पनि साँचेका छैनन् । ताजगीपनबाटै वितरण गर्दै आइरहेकाछन् । प्रकाशनको विलम्बपनले गर्दा कहिलेकाहीं त्यसमा अलिकति सिथिलताको महसुस गर्नासाथै पुनः ताजगीपनको आयोजना गर्न पछि पर्दैनन् । यस किसिमको नियात्रा लेखन नेपाली नियात्रा साहित्यमा एकदमै कम देखिन्छ । यसलाई पूरा गर्ने क्रममा उनी सधैं तल्लीन रहेका छन् ।

यात्राको लहरीमा हिउँफूलकी रानी यो शीर्षक आफैंमा सुन्दर र मनोहारी छ । काव्यात्मकताले भरिएको छ । आचार्य विश्वनाथले भनेका छन्- 'वाक्यं रसात्मकम् काव्यम् ।' रसात्मक वाक्य नै काव्य हो । यो परिभाषाले काव्यको व्यापक धरातलीय ढोका खोलिदिएको छ । कुनै पनि विधामा रसात्मक वाक्यको आयोजना हुनासाथ त्यसले काव्यको स्वरुप धारण गरेर पाठकका हृदयमा स्नेहसिक्त स्थान बनाउन थाल्दछ । घनश्याम राजकर्णिकारको 'यात्राको लहरीमा हिउँफूलकी रानी' यो शीर्षकले मलाई चुम्बकले फलामलाई तानेझैं एकै झड्कामा तानेर काव्यिक लोकमा घुमाउन सफल भयो । शीर्षकको गहनताले मभित्रको समीक्षक फुरफुराउन थाल्यो । राजकर्णिकारका प्रत्येक नियात्राभित्र मेरा आँखा बुर्कुसी मार्न थाल्दछन् । मस्तिष्कमा राष्ट्रियताको ध्वजा फरफराउँन थाल्दछ भने मुटुभित्र मायाको सगरमाथा ठडिएर नेपालीत्वको भाव जुर्मुराउन थाल्दछ । म शीर्षकलाई ऐना बनाएर आफ्नो अनुहार क्वारक्वार्ती हेर्दछु । त्यहाँ म आफ्नो अनुहार होइन, राष्ट्र, राष्ट्रियता र देशभक्तिको भाव छताछुल्ल भएर पोखिएको पाउँदछु । अनि म एकै सासमा भन्दछु- घनश्याम राजकर्णिकारले प्राप्त गरेको नियात्रात्मक सफलता यही नै हो ।

'हिउँफूलकी रानी' नेपाल राष्ट्र हो । राष्ट्रियताको प्रतीक हो । हिमाच्छादित मुहारले सधैं मुस्कुराइ रहने सुन्दरताको प्रतिमूर्ति नेपाल हो । नेपाल हिमालै हिमालको देश हो । विश्वमा दशओटा उच्च हिमशृङ्खला छन् । ती दशमध्ये आठओटा उच्च हिमशृङ्खला त नेपालमा नै छन् । हिमाल र नेपाल भन्नु एक अर्काका परिपूरक हुन् । हिमालबिनाको

नेपाल र नेपालबिनाको हिमालको परिकल्पना नै गर्न सकिँदैन । कुनै किसिमको पतझड नभइकन हिमाल सधैँ हिउँको चुलीले ढकमक्क भइरहन्छ । हिउँको सुगन्धले देश सधैँ मगमगाई रहन्छ । हिमालमा शीतलत्व र पावनत्वका साथसाथै आनन्दात्मकता पनि हुने गर्दछ । हिउँचुलीले हामीलाई सामाजिक सद्भावको सन्देश दिएको छ । आर्थिक समृद्धिको बाटो तय गरिदिएको छ । धार्मिक र सांस्कृतिक महत्वको छहारी प्रदान गरेको छ । यति मात्र होइन हिउँचुलीले हामीलाई स्वाभिमानको शिर ठाडो गर्न सिकाएको छ । बगेर जाने पानीका बुँद-बुँदमा मानवताको मुस्कान छर्न सिकाएको छ । विश्वसभ्यताको उद्गमस्थल हिमालले हामी सबैलाई 'बसुधैव कुटुम्बकम्'को पाठ पढाइरहेको छ । ज्ञानविज्ञानको साधना स्थल हिउँफूलको देश नेपाल प्राचीन समयदेखि अहिलेसम्म विश्वभरि नै आफ्नो मुस्कानको सुगन्ध छरिरहेको छ । सुन्दरता र मनोहारिताको खानी, 'हिउँफूलकी रानी' कुनै एकको पटरानी नभइकन यो त सबैको घटघटवासिनी जीवनदायिनी मातृत्वकी जननी हो । जसमा सारा सृष्टिको अक्षयकोष लुकेको छ । प्राचीन परम्पराको महिमाले मण्डित हिउँफूलकी रानी सबैको मनको नगरी हो । ज्ञानविज्ञानको उद्गमस्थल हिउँफूलकी रानीले मृतसञ्जीवनीको रसपान हामी सबैलाई गराइरहेकी छिन् । हिउँफूलकी रानीको यही अनुपम विशेषतालाई अङ्गीकार गरेर नियात्राकार घनश्याम राजकर्णिकारले यस नियात्रा सङ्ग्रहको नाम 'यात्राको लहरीमा हिउँफूलकी रानी' राखेका हुन् । उनी स्वयं पनि हिमशैल केशले सजिएका छन् । वार्धक्यको सौन्दर्यले उनका सेता कपाल हिउँफूल समान देखिएका छन् । त्यसैले त उनका नियात्राहरु मानसिकताको कोणबाट हिउँफूल नियात्राका वरिपरि भुनभुनाएर नाचिरहन्छन् भन्न मलाई संकोच लाग्दैन ।

राष्टि्रयताको गौरवलाई नियात्राकार राजकर्णिकारले 'यात्राको लहरीमा हिउँफूलकी रानी'मा छरेका छन् । उमारेका छन् र रङ्गीचङ्गी फूलका रुपमा फुलाएका छन् । अनि त्यसैलाई नै हिउँफूलकी रानीका रुपमा प्राणप्रतिष्ठा गरेर नियात्रात्मक सौन्दर्यको अभ्यर्चना गरेका छन् । अनि वनचरी र मनचरीको भाँती आफ्ना यात्राका पाइलाहरु अविश्रान्त गतिमा देश-विदेशका सुन्दर दृश्यहरुमा रुपान्तरण गरिरहन्छन् । 'यात्राको लहरीमा हिउँफूलकी रानी' यसैको ज्वलन्त उदाहरण हो । यहाँ नियात्राकारको मन राष्ट्रियताले आप्लावित भएको छ । राष्ट्रभक्तिको लहरीले यात्राका पाइलाहरु, समृद्धि र वैभवताका दिशातर्फ परिलक्षित भएका छन् । उनले प्रकृतिको रमणीयताभित्र आनन्दानुभूतिको खोजी गरेका छन् । भौतिकताको चरम उन्नतिमा मानवीय संवेदनाको अन्वेषण र विश्लेषण गरेका छन् र सत्यम्, शिवम्, सुन्दरम्को ज्योति जगमगाएर आध्यात्मिकताको छहारीमा जीवन बाँच्नुको कला खोजेका छन् । यिनै कुराका सापेक्षतामा नेपाली हुनुको अर्थमा गौरवान्वित हुँदै जहाँको माटोमा उभिए तापनि नेपालीत्वको बिउ छर्न पछि पर्दैनन् । यसैको सिङ्गो अनुभूति र अनुभवको सँगालो बनेर आएको छ- 'यात्राको लहरीमा हिउँफूलकी रानी ।'

राजकर्णिकारलाई बुद्यौलीले छेकेको छैन । अबेर नगरीकन आँखाले समाएका दृश्यलाई मनको मदानीले मथ्दै नियात्राको नौनी (मखखन) निकाली रहन्छन् । आफ्ना नियात्रामा पहिले आफैं मुस्कुराउँछन् । आफैं बातचित गर्छन् र नियात्राका प्रत्येक हरफहरुमा नेपाली हुनुको महत्व दर्साइरहन्छन् । नियात्रालाई यति धेरै माया गर्छन् कि कतै त्यहाँका कोमल बान्कीहरुमा कुरुपताले आक्रमण गरेको त छैन भनी त्यसको एक एक खोजी गरेर त्यसलाई सात डाँडा कटाउन पछि पर्दैनन् । यो उनको लेखकीय विशेषता हो । यो विशेषता 'यात्राको लहरीमा हिउँफूलकी रानी' सम्म आइपुग्दा समेत छाडेका छैनन् । बरू अझ बढ्ता परिष्कार र परिमार्जनका उपकरणहरुलाई धारिलो बनाएर प्रस्तुत भएका छन् । शब्द र अर्थको विन्यासमा नियात्राको शिलान्यास गर्दछन् ।

फूल मगमगाएको सबैले थाहा पाएका हुन्छन् तर हिउँफूल मगमगाएको थाहा पाउने घनश्याम राजकर्णिकारहरु जस्ता मात्रै हुन्छन् । उनले आफ्ना यात्राका लहरीमा हिउँफूलको सुगन्ध मगमगाएको प्रशस्त अनुभूति गरेका छन् र सोही अनुभूतिलाई नियात्राका थुङ्गा बनाएर हिउँफूलकी रानी नेपाल आमाका पाउमा न्यौछावर गरेका छन् ।

'यात्राको लहरीमा हिउँफूलकी रानी' यस नियात्रा सङ्ग्रहभित्रका जम्मा नौ वटा नियात्राहरुमध्येमा दुईओटा नेपालसम्बन्धी, ६ वटा भारत सम्बन्धी र एकओटा अमेरिका सम्बन्धी रहेका छन् । नियात्राकारले नेपालबाट उठान गरेर अमेरिकामा पुगेर सङ्ग्रहको बिट मारेका छन् । नेपाल, भारत र अमेरिकाको त्रिवेणी बनेर आएको यस सङ्ग्रहले नेपाली नियात्रा परम्परामा अर्को नवीन अध्यायको प्रारम्भ गरेको छ । घनश्याम राजकर्णिकारकै नियात्रात्मक लेखनमा पनि अझ नवीनताको उद्बोधन भएको छ । नियात्राकारले प्रत्येक नियात्राको प्रारम्भमा पृष्ठभूमि वा परिचय दिएका छन् भने अन्त्यमा निष्कर्ष प्रदान गरेका छन् । नियात्रा लेखनमा विषयको प्रस्तुतिमा इवाम्म हाम फालेर त्यससम्बन्धी इतिवृत्त एवम् रचनागर्भ दिएका छन् । जसले गर्दा नियात्रा एकदमै पढौं पढौं लाग्ने भएका छन् । त्यस्तै टुङ्ग्याउनीमा नियात्राभित्रको गुदीलाई चाख लाग्दो किसिमले व्यक्त्याएका छन् । यस किसिमको चेतनप्रवाह शैलीले 'यात्राको लहरीमा हिउँफूलकी रानी' यो नियात्रात्मक कृति उत्तुङ्ग बनेको छ । पूर्वीय संस्कृतिको आलोक प्रदान गर्दै नियात्राकारले नेपाली जातीय गौरव, स्वाभिमान र राष्ट्रियतालाई विशेष प्राथमिकताका साथ प्रस्तुत गरेका छन् । मूलतः उनको नियात्राकार मन जुनैसुकै बेला पनि राष्ट्रियताको मुटु बनेर देखा परिरहन्छ । उनी आफ्ना यात्राका पाइलामा नेपाली मन, नेपाली पन र नेपाली तन रोप्तै जान्छन् र त्यहीबाट मगमगाउँदो हिउँफूल उमारेर नियात्राको सुगन्ध छरिरहन्छन् । कुनै पनि नियात्रामा प्रवेश गरेर निस्कँना साथ प्रत्येक पाठक राष्ट्रियताको हिउँफूलले आफू स्वयं सुगन्धित भएको महसुस गर्दछ । यो नै 'यात्राको लहरीमा हिउँफूलकी रानी' नियात्रा कृतिले प्राप्त गरेको उच्चतम उपलब्धि हो ।

अन्त्यमा नियात्राकार घनश्याम राजकर्णिकारको 'यात्राको लहरीमा हिउँफूलकी रानी'ले नेपाली नियात्राको इतिहासमा राष्ट्रियताको लालमोहर लगाएको छ । आफ्ना पूर्ववर्ती नियात्राहरुबाटै राष्ट्रियता र देशभक्तिको अनुष्ठान गर्दै आएका राजकर्णिकारले यस नियात्रा सङ्ग्रहका माध्यमबाट पूर्णाहुति गरेका छन् । यात्राका लहरीका क्रममा प्राप्त भएका तथ्य-सत्य सामग्रीहरुलाई उनले अनेकौं सान्दर्भिक सूचनाहरुद्वारा स्पष्ट र पारदर्शी गराएका छन् । अतः यस दृष्टिबाट मूल्याङ्कन गरेर हेर्दा यस सङ्ग्रहका नियात्राहरु अझ बढ्ता रापिलो, तापिलो र स्वादिलो बनेर देखा परेका छन् । जसले गर्दा राजकर्णिकारको नियात्रा लेखनकै इतिहासमा 'यात्राको लहरीमा हिउँफूलकी रानी' 'मास्टर पिस' बन्न सफल भएको छ भन्ने मैले ठानेको छु । नियात्राकारलाई मुरी मुरी बधाई ज्ञापन गर्दै अन्य नियात्रालेखनका लागि शुभेच्छा प्रकट गर्दछु ।



# नेपाल चिनाउँने राजा



■ दामोदर अर्याल (हितकर)

म मरे पनि मेरो देश बाँचिरहोस् भन्ने दिव्य सन्देश दिने राजा, एसियाको टिटोको रूपमा प्रसिद्धि पाएका राजा, मार्सल टिटोले स्टालिनको सर्वसत्तावाद आगे नझुके जस्तै विस्तारवादी सत्ताको अगाडि नझुकेका राजा, नेपाल र नेपालीको लागि सधैं चिन्तित जनताको सुख-दुःखमा हात बढाउने राजा, देशलाई चिन्न र आफूलाई चिनिन मन पराउने त्यसैले देशको कुना काप्चा पुगेर रारा ताल पत्ता लगाउँने राजा, राजा बनेर हैन रंक बनेर गाउँ डुल्ने राजा। राजा महेन्द्रको छबि विचित्रको थियो।

एक दिन यस्तै विश्वास पात्र अङ्गरक्षक शेरबहादुर मल्ललाई साथ लिएर हिडेछन् राजा पश्चिम तर्फ। जाँदाजाँदै उनी खनायोवास भन्ने गाउँमा पुगेछन्। खनायोवास भन्ने गाउँ काठमाडौंबाट धेरै टाढा छैन। लामो पाइला गरेर हिड्न सक्ने जो कोही एकै दिनमा त्यहाँ पुग्छ। राजा त्यहाँ पुग्दापुग्दै झमक्क साझ परिहाल्यो। मल्ल जर्नेल साहेबलाई पिर पर्नथाल्यो, राजालाई कहाँ बासबसाउने ! राजाले आफ्नो अंगरक्षकको समस्या बुझेर सम्झाउँदै भनेरे एक रातको बसाई त हो जहाँकहिं पनि ओत लागौंला। त्यस माथि हामी नेपाली साँझ पखको पाहुँनालाई देवता सरह मान्छौं। जसले पनि बास दिई हाल्छ के को पिर ! दुवैले गाउँको बाटो समाते। जाँदा अल्लि पर के पुगेका थिए एक जना अलि पाका उमेरका बुढा बालाई भेटेछन्, उनै सित सोधेछन् यहाँतिर बास पाइएला ? रसिला-फरासिला खालका बुढाले भनिहाले साँझपखको पाहुनालाई कता अन्त राख्नु ! म आफ्नै घरमा लैजान्छु नि। राजाले पिंडीको आस गरेका थिए बुढाले त घर भित्रै पो लगेछन्। अगेनाको छेउमा गुन्द्री बिछ्याई दिए त्यस माथि तन्ना। राजा दङ्ग परे। बुढी आमा दङ्पर्दै मकै भुट्न थालिन्, बा गबुवा बोकेर गोठतिर लागे। भर्खरै दुहेको दुध त्यो पनि खावा बनाएर उमालेको दुध अमृत तुल्य भयो। मकैको फुलैफुल सितनमा मह अलिकति तिलको छोप दिनभरी थाकेर बास बसेको पाहुनाको लागि खाँदै गफ गर्दागर्दै रात निकै बेर बितेको पत्तै भएन। मल्ल जनरल साहेबले भन्नु भएछ सुकला हुने बेला भयो। सरकार भनेर बाटामा मलाई सम्बोधन नगर्नु राजाको आदेश। त्यसैबेला राजाको आखाँ अलि परको किताब भानुभक्तको रामायणमा पुगेछ, राजाले भट्याउन बुढासँग अनुरोध गरेछन्। बुढा बाले कराइ-कराइ भट्याए, राजाले आनन्द मानेर सुने। रात निकै बितेको थियो, सुन्ने र सुनाउँने दुवैलाई पत्तो भएन। बल्ल बुढी आमा कराइन कति भट्याइरहेको भोलि सखारै बाटो लाग्नु पर्ने पाहुनालाई सुत्न नदिएर। भोलिपल्ट झिसमिसेमै बाटो लाग्नु थियो दुवै उठे।

जानेबेला भयो बुढीआमाले बाटाको सामल दिईन् घ्यू खर्ट्रे अलि कति तिलको छोप। राजाले आफ्नै हातले लिए। त्यो क्षण मलाई यस्तो लाग्यो कि मानु सुदामाले दिएको सौगात द्वारिकाधिशले श्रद्धा साथ हात थापे। राजाले एउटा खाम दिए तर बुढाबाले लिन मानेनन्, राजाले खल्तिमै हालिदिए। मल्ल जर्साहेबले मेरो ठुलो बुबा इन्द्रलाई बताएको अनि त्यही श्रुति मेरो ठुलो बुबाले मलाई सुनाएको।

राजाले जानेबेला बुढाबासँग सोधेछन् बा तपाईले आफ्नो राजालाई चिन्नु हुन्छ। के को चिन्नु नामसम्म सुनेको छु महेन्द्र भन्ने राजा छन् रे। उनी यतातिर आउँदैनन्, नेपाल छाडेर त्यहाँ जाने पशुपतिनाथको दर्शन गर्ने रहर आफूलाई कहिल्यै पुगेन। त्यो वाक्यले राजालाई चोट दियो मर्माहित बनायो। नेपाली काठमाडौंलाई नेपाल भनेर चिन्छन् आफ्नै राजालाई चिन्दैनन्। अब राजाले अठोट गरे। म नेपाल चिनाउँछु नेपालीलाई मात्र हैन पूरै विश्वलाई।

एक दिनको कुरो हो दरबार गएका ठुलो बुबा राती अबेरसम्म पनि आउनु भएन, सधै चार बज्दा नबज्दा फर्कि सक्ने मान्छे। दश बजेतिर फर्किनु भयो ठूली आमा कराउनुभयो। आज किन अबेर। उत्तर आयो राजाले पर्खन भने म पर्खें बल्ल नौ बजेतिर भेट दिए त्यसैले अबेर भयो।

त्यसको पर्सिपल्ट अकस्मात् राज दरबारको घोडचढी आयो एउटा पत्र बुझायो। अनि पो बुझियो अस्तिको दिन अबेर भएको कारण। राजाले दौडाहा जस्तो टोली गठन गरेका रहेछन्। त्यो टोलीमा इन्द्रनाथजीको साथमा तारकबहादुर शाह, धर्मरत्न यमी, शेरबहादुर मल्ल, ईश्वर नरसिंह राणा मनोनित हुनुहुँदो रहेछ। नेपाल चिनाउँने टोली जसको काम नेपालीको घरदैलो पुगेर राजाको सन्देश सुनाउने।

काठमाडौं मात्र नेपाल होइन पूर्व मेचीदेखि पश्चिम महाकालीसम्म, हिमालदेखि तराईसम्म हो अनि तिम्रा राजा तिम्रै घर दैलोमा टेक्न आउँने छन्। वास्तवमा त्यो दौडाहा टोली थिएन एउटा सन्देश बाहक टोली थियो। त्यो टोलीलाई केही राजा विरोधीहरूले, राणाहरूले पठाउने गरेको दौडाहा टोलीसँग गाँसे। त्यो दौडाहा टोलीले पजनी गरेन कसैलाई खोसेन, मात्र आवश्यक सहयोग माग्यो प्रशासनसित।

राजा महेन्द्रसित इन्द्रनाथजीको निकै घनिष्ठ सम्बन्ध थियो। राजाले ताप्लेजुङको खोक्लिङ भन्ने ठाउँमा सुनखानी छ भन्ने सुनेर त्यहाँको खानी खन्न इन्द्रनाथ अर्याललाई नै पठाएका थिए। केही मिटर सुरूङ खनिएका पनि थिए, अझै त्यो सुरूङ हुनुपर्छ त्यहाँबाट केही ढुंगा निकालिएका थिए। केही उहाँले आफ्नै घर नरदेवी ल्याउनुभएको थियो। केही ल्यावटेस्टको लागि कलकता पठाइएको पनि थियो तर पछि त्यो प्रोजेक्ट त्यसै हरायो किन तुहियो थाहा छैन।

# मात चढेको राजनीति



डा. विश्वदीप अधिकारी

तपाई प्रधानमन्त्री भएको महिनौ भइसक्दा पनि तपाईले मन्त्रीपरिषद गठन गर्न सक्नु भएन नि ।

भइहाल्छ । अब छिटै भइहाल्छ । तपाईहरुले थाहा पाइहाल्नु हुन्छ ।

तपाईले सपथ खाँदा त तुरून्तै हुन्छ भन्नु हुन्थ्यो । अब रङ्ग बदलेर यो छिट्टै भन्न थाल्नु भएको पनि धेरै दिन पो भयो त ।

होइन रङ्ग बदलेको होइन । अब छिट्टै भइहाल्छ । तपाईहरु ढुक्कहुनुहोस् ।

यसको रिमोट कहाँ छ ।

रिमोट म नै हुँ ।

तपाई नै रिमोट भए देशमा भइरहेका मन्त्रालय त बढ्ता छन् तपाई तिनलाई घटाउनुको सट्टा बढाएर मन्त्री संख्या बढाउन लाग्नु भएको छ नि त ?

राजनीतिमा यस्तो तलवितल भइरहन्छ । यो कुनै ठूलो कुरो होइन । ठूलो कुरो त देश बनाउने हो त्यो हामी गरिहाल्छौं ।

होइन तपाई यसरी जनतालाई ढाँट्ने अलमलाउने गर्न पाउनु हुन्न । यथार्थ कुरा भन्नुस् तपाईको रिमोट कहाँ छ । हामीले पनि पत्रकारिता गरेको धेरै भयो जुँगा हल्लेपछि कुरा बुझी हाल्छौं ।

त्यस्तो रिमोट सिमोट त केही होइन तर पनि महाराजगञ्ज, दिल्ली, वासिङ्टनसँग त टनका टन कुरा भइरहन्छ नि ।

तपाईहरुको यो अनुत्तरदायी चालाले देशको काम त ठप्पै भयो नि ?

होइन भएको छैन । कर्मचारीहरुले काम गरिरहेका छन् । हामी काम गरिरहेका छौं ।

खै कहाँ के काम भएको छ जताततै लथालिङ्ग भताभुङ्ग छ ?

तपाईहरु त्यतैतिर लागेर मात्र त्यस्तो देखिएको हो । वास्तवमा काम भएको तिरको कुरा पनि प्रचारप्रसार गरिदिनु भए राम्रो हुने थियो ।

यो संसद अधिवेशन चाहीं कहिले अन्त्य हुन्छ नि ?

हामीले नै भद्र अवज्ञा गर्न सिकाइदिएको हो । उहाँहरु थाकेर बस्नु भएपछि हामी अन्त्य गरिदिउँला । खासै भन्ने हो भने उहाँहरु हामीहरु कसैलाई पनि यो संसद चाहिएकै छैन । योग्यले चुनाव जित्दैनन् अनि म जस्ता जनअधिकार नभएका हार्नेलाई मन्त्री प्रधानमन्त्री नबनाई हुँदैन । संसदमा हल्ला भइरहोस्न के बिग्रेको छ र । देश त सरकारले बनाउने हो हामी बनाइहाल्छौं । ल है अरू पछि अहिले मिटिङ्गमा जान हतार भयो । टेलिभिजन पुगेर कुरिरहेको छ रे ।

जेठको प्रचण्ड गर्मीमा सुर्यास्तपछि आँपको वोट मुनि एक झुण्ड भएर गफ गरिरहेका मानिसहरु मध्ये रामलखनले मोवाइलबाट बजेको एफएमको खबर सबैले सुनेपछि उसले मोवाइलको एफ एम रेडियो बन्द गऱ्यो ।

“रामलखन एफ एम खोलन किन बन्द गरेको अरू केके भन्छ त्यो पनि सुनौं न” भरतले उत्सुकता देखाउँदै भन्यो ।

“के सुन्नु यस्तो लाजमर्दो कुरा । फोहोर गर्नेलाई भन्दा देख्नेलाई लाज । फेरी हामीलाई हर्ष न विस्मात । जो मन्त्री भए पनि आफैले किस्मत नगरी हाम्रो मुखमा माड लाग्दैन । त्यसैले बन्द गरिदिएको ।”

भर्खरै आएर उनीहरुको छेवैमा हरियो मकैलाई आगोमा पिल्साउँदै काखे बालकलाई एक लाम्टो दूध चुसाउँदै गरेकी हरियाले भनी “के कुरा गरेको रामलखन ?”

“हाम्रो यति सानो देशमा पचासौ जनाले मन्त्रीको जागिर पाउन आँटेछन् भनेको । यसै त फोहोरको थुप्रो चुलिएर रास भइसक्यो त्यसमाथि यिनीहरुले अब कति दुर्गन्ध थप्ने हुन् ।”

“आगामा मकै पिल्साउँदा पिल्साउँदा आफू पनि यहि रापमा पिल्सन आँटीसकें । छोरो पनि यसैमा पिल्सिरहेछ । यहि काँचा मकै, यिनै आगो र धुवाँमा विलाइने भइयो । काठमाडौं गएर धर्ना दिएको भए मैले पनि कतै मन्त्रीको जागिर पाउँथे कि । कमसेकम अलिकति सुविस्ता त हुन्थ्यो ।”

“जाउजाउ हरिया । मौकाको फाइदा उठाऊ । तिम्रो त कमसेकम आगोको भुङ्ग्रो बनाएर मकै पोल्ने त शिप छ । विना शिपका चुनाव हारेका मान्छे त मन्त्री भइरहेछन् धमाधम । यसैबाट नै तिम्रो लागि पनि बाटो खुलिहाल्यो नि ।” रामलखनले भन्यो ।

आगोको रापले रातो भएको मुखमा सेता दाँत देखाएर हरिया हाँस्दा साच्चै देश भनेको हरिया पो जस्तो लाग्यो रामलखनलाई– एकदम स्निग्ध । निष्कलङ्क । अन्जान ।

कुरै कुरामा सबै हरिया सँग एक एक घोगा पोलेको मकै किनेर चपाउँदै गोलबन्द भएर बसे । सबैको मनमा देश कता गइरहेछ भन्ने छटपट छँदै थियो । त्यसदेखि बाहेक आफूले समर्थन गर्ने गरेको दलको हैसियत के हुन्छ भन्ने उत्सुकता पनि थियो उनीहरुमा । किन त भने उनीहरु देशबारे सोच्दा मनमनै आफ्नो दलको लाइन देश हिंडेको बाटो तिर मिले नमिलेको पनि गम्ने गर्दथे । सबैजना आफू आफ्नो दल र देशको चक्करमा अल्झिएका थिए ।

यतिकैमा गौरवले भन्यो “हाम्रो भविष्य त झन् झन् अन्धकार पो हुँदै गइरहेछ वा । देशमा के के न होला भनेर दलको पछि लागेर मुर्दावाद जिन्दावाद गर्दै हिंडेको त बेकार पो भएछ । त्यो समय देश बुझ्न खर्चेको भए कतै देश यो भुँवरीमा पर्ने थिएन कि ।”

“किन र के भयो गौरव” सतीशले सोध्यो ।

“के हुनु नि देखेनौ हाम्रो प्रतिनिधि आफू र पद भनेर दौडेका राजधानीमा । हामीले दिनरात दल र देश भनेर दौडादौड गरेको त उनीहरुलाई हाइसञ्चो गर्न पो रहेछ त । धिक्कार छ यिनीहरुलाई ।”

“राजनीतिमा यस्तो भइहाल्छ नि छाडिदेउ । सकुञ्जेल खान दिउँ यिनीहरुलाई । नबोलिकन चामल पनि बिक्दैन अनि के गरून् बवुराहरु” सतीशले भन्यो ।

“अनि चुनावमा त देश बनाउने भनेर भोट मागेका थिए नि त । हामी पकाइ रहने उनीहरु खाइरहने यहि हो त प्रजातन्त्र भनेको ?” हरियाले भनी ।

“आफैं बन्ने भनेर भोट मागेका भए त कसले भोट दिन्थ्यो र उनीहरुलाई । राजनीति भनेकै भ्रम हो । माया जाल हो क्या हरिया । हामी सँगै मीठा कुरा गरेर हाम्रै खुट्टा काट्छन् यिनीहरु । यी त दयामाया नभएका निरङ्कुस हुन्छन्” सतीशले भन्यो ।

“माया जाल भनेपछि त मैलेजस्तै बच्चा पाउनुपर्ने नि त । पायो त राजनीतिले बच्चा ?” हरियाले बत्तिस दाँत डिचिक्क पार्दै भनी ।

“यो विकासे हो थारो हुन्छ । ओथारो बस्न जान्दैन । यसैले हाम्रो राजनीतिले बच्चा पाउँदैन । ब्वाइलर कुखुरालेजस्तै आफैमात्र

गमगमी खाएर बोसो हाल्छ । मौकापर्दा यिनीहरुले हामीलाई नै बेचिदिइसकेका हुन्छन् जुन हामी थाहा नै पाउँदैनौं" गौरवले यसो भनेको सुनेर सबै गफ्फ़ेहरु गलल हाँसे ।

तर गौरव भने हाँसेन । जनआन्दोलनको मर्मलाई भुसुक्क बिर्सेर किलामा झुण्ड्याएर कोटको खल्तीबाट मनपरी चिट झिकेर राजनीतिक बेइमानहरुले गर्ने गरेको ज्यादती र जनविरोधी कार्यले गर्दा उसले त चारैतिर अन्धकार मात्र देखिरहेको थियो । कतै पिलपिल बत्ती बलेको अनुभूतिसम्म हुने गरेको थिएन उसलाई । संविधान बनाउने संविधानसभामा विपक्ष हुँदैन भन्ने भावनालाई आत्मसात गरेर बनेको अन्तरिम संविधानलाई संशोधन गरेर विपक्ष हुने प्रावधान राख्ने हरूवाहरुको प्रवृत्तिले राजनीतिलाई भताभुङ्ग पारेर आफ्नो दुहुनो सोझ्याउन सबै लागेको देखेर गाउँमा सुनेको एउटा कथा सम्झ्यो उसले । बरावर भाग लगाई अलग भएर छुट्टिएका दुइ भाई आ-आफ्नो व्यवहार गरी बसिरहेको अवस्थामा भाइ चाहीको एक हल गोरू मध्ये एउटा मऱ्यो । त्यसपछि दाइको भन्दा भाईको सम्पत्ति कम हुन गयो । यसैले आफूलाई गोरू मरेकोमा सहानुभूति दिन आउनेलाई उसले भन्यो "मेरो दाईसँग भएको एक हल गोरू मध्ये एउटा मारेर सहयोग गरिदिनु पऱ्यो । किन त्यसो गर्ने भन्दा उसले भन्यो त्यसपछि पो हामी दुइ भाइको सम्पत्ति वरावर हुन्छ त" ।

गौरव टोलाएको देखेर रामलखनले "के टोलाएको के भयो" भनेपछि उसले आफूले सम्झेको कथा उनीहरुलाई पनि सुनायो ।

"यो जताततै चम्केको ढुङ्गा हानाहान, नारा, जुलुस सबै अरू टाठाबाठालाई राष्ट्रपति, प्रधानमन्त्री, मन्त्री बनाउन पो रहेछ" सतीशले भन्यो ।

"त्यै त रहेछ नि । राष्ट्रपतिले पनि आफूलाई अधिकार नहुँदा नहुँदै आफ्नो जागिर जाला भनेर महारथीको जागिर जोगाइदिएको त हो नि । आफ्नो हितको लागि पदमा पुगेकाहरुले जे गरे पनि हुने छुट छ अहिले हाम्रो देशमा" गौरवले भन्यो ।

"अनि माथि-माथिको पदमा झन् संस्कार, अनुशासन, इज्जत हुन्छ भनेको होइन त ?" हरियाले पोल्न हालेको मकै फर्काएर आगो भर्भराउँदै भनी ।

"त्यो त तिमी हामीसँग भोट माग्दा तावेदारहरुले बोल्ने भाषा पो हो त । हामी मतदाताकहाँबाट माछो उछिट्टिएर गएपछि कहिले भ्यागुतोको धार्नी पुग्दैन । कहिले धमिलो पानीमा माछामार्ने काम हुन्छ । कहिले आधारातमा निर्णय गर्ने काम हुन्छ । यी सब कुरा हामीहरुको हितविरोधी कार्य हुन्" सतीशले भन्यो ।

"उहिलेदेखि नै मुख्य सचिव सिंहदरवारको बगैचाबाट फलफूल चोरेर घर लैजाने र मन्त्री प्रधानमन्त्रीहरु सरकारले गर्ने निर्णयबाट प्रभावित हुने आफ्ना मान्छेलाई बाहेक गरेर बचाउने काममा लागेको भएर नै नानीदेखि लागेको बानी कसैको पनि गएको छैन सबैको उस्तै छ" रामलखनले भन्यो ।

"हो अहिले पनि कसैका छोरी कुक्कुरका छाउरा क्वाइँ क्वाइँ कराएजस्तै कराइरहेछन् । कसैका तावेदार खाँवा कोपर्दै छन् । कसैका छोरा भुतभुताएर हिंडेका छन् । कसैलाई पद चाहिएको छ । कसैलाई सम्पत्ति बचाउनु परेको छ । मामाको घोडि मेरो हिँहिं गर्न छाडेर देशरुपी समुद्रमा पौडि खेलेर आफ्नो अस्तित्व दाउमा लगाउने काम विनसित्तिमा को गर्थ्यो" गौरवले भन्यो ।

"यो चालाले त लडाइँ हारेका सिपाही नै बलियाजस्ता देखिए नि त" हरियाले मकलमा भरिएको खरानी फू गरेर फुकेर उडाउँदै भनी ।

"बुझ्यौ हरिया तिमीले एकछिन अघि मकै पोल्न छाडेपछि मकलको आगोमाथि खरानी परेका थिए झपक्क भएर होइन त । अहिले तिमीले फुर्र फुक्दा सबै खरानी हल्कासँग उडेर गए । तर खरानी मुनि त आगो राताम्मै देखियो नि । यस्तै छ अहिले हाम्रो देशको स्थिति । अर्थात् यही भुङ्ग्रोमाथि बसेका छौं हामी अहिले" गौरवले भन्यो ।

"त्यो कसरी" मकै बेचेको पैसा गनेर पोल्टामा थन्काउँदै उसले फेरी भनी ।

"तिमीले अहिले मकै पोलिसकेपछि भएको फोहोर कतै निश्चित ठाउँमा नफालेर यहिँ यसै छाडिदिन्छ्यौ । हामीहरु पनि खाएको मकैको घोगा यहिँ यत्रतत्र फालेर जाँदैछौं । सबैले फोहोर गर्न मात्र जानेको छ । त्यसैगरी राजनीति गर्नेहरुको पनि बुद्धि यस्तै छ । त्यसैले नि" सतीशले भन्यो ।

"राजनीतिमा मात चढेपछि यस्तै हुनेगर्छ हरिया । उत्ताउलाजति नमासिइकन वास्तवमा हामीले केन्द्रको समाचार सुन्नु बेकार छ । यिनीहरुको हथकण्डा देखेर बेकारमा मनमा अनेकौं झञ्झावात मात्र आउँछ । रगत मात्र उम्लन खोज्छ । बहुलाएर जिन्दावाद-मुर्दावाद भन्दै उनीहरुले जस्तो सडक जाम गरूँ भने भएन" गौरवले भन्यो ।

"सडक जाम त अब अवैध गर्भधारण गर्दा पनि गर्न पाइने भएछ नि- लोग्ने कायम गराई पाउँ भनी । मैले त अस्ती भर्खर नुवाकोटको समाचार पढेर यो कुरा थाहा पाएको" रामलखनले भन्यो ।

रातको करीव दश बज्न थालिसकेकोले सबैजना खितित्त हाँसेर छितरिए ।



निद्रावस्थामा चेतन मन हराउँछ

हरेक दिन बिहान सबेरै उठेदेखि बेलुकी सुत्नु अगाडिसम्म मान्छे कुनै न कुनै रूपले सक्रिय जीवनशैली मै समय बिताउँछ तर जब राती सुत्छ तब उसले चेतनाका ४ वटा स्तरहरू : जागृत अवस्था, सुषुप्तावस्था, स्वप्नावस्था र तुरीयावस्थाको भोगमा मस्ती लिन्छ । चेतनाका विभिन्न स्तरहरू रहेको कुरा वेद, उपनिषत्का साथै चिनिया विचारधारा लगायतका विभिन्न मुलुकका भिजनहरूले पनि आ-आफ्नै ढंगले व्याख्या गरेको पाइन्छ । कसैले त्यस्ता सपनाबाट अप्ठेरा प्रश्नहरूको जवाफ मिल्दछ भन्ने जापानीजहरूको पनि व्याख्या छ ।

साधारण स्वप्न, डर देखाउने-तर्साउँने स्वप्न, अनेक विचार भरिएको स्वप्न, बिउँझाउने खालको स्वप्न, आनन्ददायक र डरलाग्दो स्वप्न गरी विभिन्न ६ खालका स्वप्नहरू बारे समाजमा गनथन सुन्न पाइने गरेको तथ्य नेपालीहरूमा व्याप्त छ । अर्को कुरा भगवान् बुद्ध जन्मनु अघि रानी मायादेवीले एकरात सपनामा सेतो एउटा ऐरावत हात्ती देखिन् । उनैको माध्यमबाट पृथ्वीमा एउटा महामानव रूपको देवताको अवतरण हुनेवाला थियो र त्यसैरात रानी गर्भवती भइन् र पछि बुद्धको जन्मभयो र आज हामी उनलाई भगवान् बुद्ध भन्ने गर्छौं । हो यस्तो खालका दैवीशक्ति



# मान्छेको जीवनमा निद्राको महत्व र सपनाको आनन्द

स्वप्नलाई दृश्यको रूपमा लिएका छन् भने कसैले स्वप्न अचेतनको उत्पादन हो भनेका छन् । ज जसले जे जे भने पनि स्वप्न मनकै एउटा अवस्था विशेष हो । परम्परागत रूपबाट आजसम्म आइपुग्दा परम्परागत विचार कुनै रहस्यमय शक्तिहरूको स्वप्नमा समावेश रहन्छ र व्यक्तिको व्यक्तित्व पनि सपनासँग सम्बन्धित रहने हुनाले अहिलेको आधुनिक युगमा आइपुग्दा पनि पुराना विचार वर्तमान अवस्थामा मान्य बन्दै आएको हो ।

निद्रा मान्छेका लागि महत्वपूर्ण मानिन्छ । सुतेको मान्छेलाई हत्तपत्त उठाउँनु हुदैन किनभने सुतेपछि मान्छेको शरीरको एउटा भाग अन्यत्र घुम्न जान्छ र जब मान्छे मस्तीको मध्ये निद्रामा हुन्छ (स्वप्नावस्था) तब उ स्वप्नमा रमाई रहने समय भएकाले मस्तनिद्रामा भएको मान्छेलाई उठाउनु हुदैन । स्वप्नका कारणहरू के के हुन सक्छन् भन्ने विषयमा मान्छे आजसम्म पनि कन्फ्यूज नै छ । जुनसुकै मुलुकमा बस्ने भएपनि आखिर मान्छे त मान्छे नै हो नि ! विश्वभरका मान्छेले आफ्नो जीवनमा अनेक अप्ठ्यारा र असहज, दुःख परिस्थितिको सामना गरिरहेको हुन्छ । दिनभर घटेका घटनाहरूको र समस्या समाधानका प्रश्नहरूको जवाफ स्वप्नमा मिल्ने गरेको भनाई समाजमा व्याप्त छ । कसैकसैले त स्वप्नबाट पितृहरूको दर्शन पाउने र संवाद गरेको कुरा पनि सुन्न पाईन्छ, र सन्देश भरिएका ज्यादै रोचक कथाहरू, सपनासँग सम्बन्धित दन्त्य कथाहरू आज पनि नेपाली र भारतीय समाजमा व्याप्त छन् । जस्तो भगवान् राम, भगवान् कृष्ण लगायत अन्य धेरै दैवीशक्तिका उदय हुँदा सपनाबाटै पूर्व जानकारी दिएको मान्यता पनि हाम्रा सामु छ । प्लेटोले पनि स्वप्नका विषयमा यसो भनेका थिए- “रातमा पनि हामीसँग एउटा जंगली जनावर (अवचेतन मन) हुन्छ र त्यो हाम्रै भित्रपट्टि घुमिरहन्छ ।”

नेपाली र भारतीय सनातन हिन्दु परम्परामा मानिसको भविष्य मानिसले जान्न सक्दैन, इश्वरको हातमा छ भन्ने मान्यता आजपनि यथावत नै छ । यसको मतलब सपनालाई विश्वास गर्ने मानिस झण्डै ८५ प्रतिशत आज पनि छन् । क्रिश्चियनहरूले पनि सपनालाई सुपर नेचुरल इलिमेन्टसँग तुलना गरेको पाइएको छ । पृथ्वीबाट स्वर्गसम्म जाने भऱ्याङ सपनामा प्राप्त गर्न सकिने विश्वास आजको वैज्ञानिक युगमा पनि उत्तिकै छ । एरिष्टोटलले सपनाबारे यसो भनेको पाइन्छ- “स्वप्न आफ्नै शरीरका रोगहरूको सन्देश हो, यो कुरा अचेतन मनले पहिल्यै नै जानिसकेको हुन्छ ।” यसबाट के कुरा बुझ्न सकिन्छ भने प्रत्येक मान्छेका स्वप्नहरू अलग अलग हुन्छन्, प्रत्येक मान्छेको व्यवसाय, परिवेश, पद, सामाजिक स्तर, रहनसहन र स्वास्थ्यले स्वप्नमा असर पार्दछ अर्थात् जसको आत्मा स्वच्छ र सफा छ त्यसले सपनामा पनि आनन्द प्राप्त गर्दछ ।

निद्रा र स्वप्नको जानकारी गराउने यन्त्रलाई इलेक्ट्रोइन्सेफेलोग्राम भनिन्छ । हरेक सपनाहरू त्यसै आएका हुदैनन्, निद्रावस्थामा दिमागमा रेकर्ड भएका सबैजसो भावनाहरूलाई हेर्ने र केलाउने कार्य हुन्छ । मस्तिस्कले सुतेको बेलामा मुटुको चाल एवं श्वास-प्रश्वासलाई नियन्त्रण गर्ने गर्दछ, अर्थात् सुतेको समयमा मस्तिष्कले काम गरिरहेको हुन्छ, मन भनेको मस्तिस्कको अति सूक्ष्म चेतन प्रक्रिया हो, मन-मस्तिस्कका कार्यहरू जागा बेलामा भन्दा फरक प्रक्रियाले संचालन भएका हुन्छन्, रक्तसंचार तथा श्वासप्रश्वासको काम पनि सुतेको बेलामा सुचारू रूपले भइरहन्छ ।

अन्य जनावरलाई जस्तै मान्छेलाई पनि निद्रा आवश्यक छ, विश्राम पनि आवश्यक छ, मान्छे ठीक समयमा सुत्न पाएन भने लामो आयू बाँच्न सक्दैन । पृथ्वीले २४ घण्टामा आफ्नो परिक्रमा पूरा गरे जस्तै मान्छेको शरीरले पनि पृथ्वीको चालसँग सम्बन्धित भएर आफ्नो काम गरेको हुन्छ त्यसैले प्राकृतिक तवरले निद्राको महत्व बुझि बेलामै सुत्ने र बेलामै उठ्ने बानी बसाऔं । वास्तविकता र मनको जोड नै माया हो ।

मानिसको सोचाई भन्दा सपना धेरै शक्तिशाली र अर्थपूर्ण हुन्छ, निद्रावस्थामा चेतन मन हराउँछ त्यसपछि सपना शुरू हुन्छ, सपना अचेतन मनको कार्य हो । यस्तो हुने भएकाले सपना व्यक्तिको जीवनको मार्गदर्शन बनिरहेको हुन्छ त्यसैले तपाइहरू पनि म जस्तै बेलुकी १०-११ बजेभित्र सुत्नुस् र बिहान ५ बजे भित्र उठिसक्नुस्, निद्राको महत्व बुझ्नुस् र सपनामा रमाउनुस् । ००



# जाबालोपनिषत्–४३

■ वसन्तकुमार शर्म्मा नेपाल

जाबालोपनिषत्ख्यातं सन्न्यासज्ञानगोचरम् ।
वस्तुतस्त्रैपदं ब्रह्मा स्वमात्रमवशिष्यते ।
ॐ पूर्णमद इति शान्तिः ।

**प्रथमः खण्डः**

ॐ बृहस्पतिरुवाच याज्ञवल्क्यं यदनु कुरुक्षेत्रं देवानां देवयजनं सर्वेषां भूतानां ब्रह्मसदनम् । तस्माद्यत्र क्वचन गच्छति तदेव मन्येत तदविमुक्तमेव । इदं वै कुरुक्षेत्रं देवानां देवयजनं सर्वेषां भूतानां ब्रह्मसदनम् । अत्र हि जन्तोः प्राणेषूत्क्रममाणेषु रुद्रस्तारकं ब्रह्मा व्याचष्टे येनासावमृतीभूत्वा मोक्षीभवति तस्मादविमुक्तमेव निषेवेत अविमुक्तं न त्रिमुञ्चेदेवग्नेवैतद्याज्ञवल्क्यः ।१।

*

सन्न्यास ज्ञानको सार जाबालोपनिषत् छ हो ।
त्रिपाद ब्रह्म जो खास, 'स्व' मात्रै अवशेष जो !!

ॐ, पूर्णमदः शान्ति, शान्ति ! ॐ बृहस्पतिले याज्ञबल्क्यलाई भने के भने, 'कुरुक्षेत्रनेर देवताहरूको देवयज्ञ छ, जो समस्त प्राणीका लागि ब्रह्मस्थल छ । त्यस कारण त्यहाँ जो सुकै पुग्छ त्यो तत्कालै अविमुक्त भो भन्ने ठानिन्छ । तसर्थ त्यो स्थल देवताहरूको यज्ञस्थल हो र निश्चय नै सम्पूर्ण प्राणीको ब्रह्मस्थल हो, फरक पर्दैन । त्यहाँ त कुनै पनि प्राणीको प्राण जान लागे पनि रुद्रस्तारक ब्रह्मको व्याख्या हुन्छ र त्यसैद्वारा उक्त मरणोन्मुख प्राणी अमृत बनेर मोक्षत्वमा पुग्दछ, तसर्थ अविमुक्त भई सेवन गरोस्, यस्तो अविमुक्त अवसरलाई नछाडोस् !' यसै नै यो कुरा याज्ञवल्क्यले पनि बताए ।

**द्वितीयः खण्डः**

अथ हैनमत्रिः पप्रच्छ याज्ञवल्क्यं य एषोऽनन्तोऽव्यक्त आत्मा तं कथमहं विजानी यामिति । स होवाच याज्ञवल्क्यः सोऽविमुक्त उपास्यो य एषोऽनन्तोऽव्यक्त आत्मा सोऽविमुक्ते प्रतिष्ठित इति । सोऽविमुक्तः कस्मिन्प्रतिष्ठित इति वरणायां नास्यां च मध्ये प्रतिष्ठित इति । का वै वरणा का च नासीति सर्वानिन्द्रियकृता-न्दोषान्वारयतीति तेन वरणा भवति सर्वानिन्द्रियकृतान्पापान्नश्यतीति तेन नासी भवतीति । कतमच्चास्य स्थानं भवतीति । एतद्वै सन्धिं संध्यां ब्रह्मविद उपासत इति सोऽविमुक्त उपासस्य इति । सोऽविमुक्तं ज्ञानमाचष्टे यो वै तदेतदेवं वेदेति ।२।

अनिपछि उनीसँग अत्रिले प्रश्न राखे- 'जो यो यस्तो अनन्त र अव्यक्त आत्मा छ, भने त्यसलाई म कसरी जान्न-बुझ्न सकुँला त महर्षि' ? अनि याज्ञवल्क्यले भने : जो त्यो अविमुक्त र उपास्य छ, त्यो अनन्त अव्यक्त आत्मा अविमुक्तमै स्थिर हुन पुग्दछ, यत्ति हो । त्यसको वारणा के हो ? र त्यो नाशी कसरी ? भन्छौं, सुन ! सम्पूर्ण इन्द्रियहरूद्वारा गरिएका दोषहरूलाई वरण गर्दछ र त्यसैले वारणा हुन्छ । सबै इन्द्रियकृत पाप नाश गरिदिन्छ भनेरै नाशी मानिन्छ । यसको स्थान कता कता हुन्छ ? भन्छौ भने भौं र नाकको जुन सन्धिलाई नै त द्यौ-लोक र परालोकको सन्धि (दोबाटो) बन्दछ नि ! यही सन्धिलाई नै ब्रह्मज्ञानी भेट्टाउन चाहन्छ सन्ध्याभित्र । त्यही हो अविमुक्त उपास्य भन्नु । उनी अविमुक्त ज्ञानलाई बताउँछन्- जो वीतदेव (देवता आदि प्रपञ्चबाट माथि पुगिसकेको) ब्रह्मलाई ज्ञान गर्छ । अनि यिनलाई ब्रह्मचारीहरूले भने- 'के त नि जपक्रियासँग अमृतत्त्व छ ? भने बताउनोस् !' याज्ञवल्क्यले भने- 'हो त नि शतरुद्रियद्वारा नामोल्लेख गरिने अमृत नामहरू हुन् । तिनैबाट नै अमृतत्त्वमा मिल्दछ, यो यति कुरो हो । अर्थात् ऊ अमृत बन्छ नै,' याज्ञवल्क्यले भने ।

**तृतीयः खण्डः**

अथ हैनं ब्रह्मचारिण ऊचुः किं जाप्येनामृतत्त्वं ब्रूहीति । स होवाच याज्ञवल्क्यः शतरुद्रियेणेत्येतानि ह वा अमृतनामधेयान्येतैर्ह वा अमृतो भवतीति । एवमेवतद्याज्ञवल्क्यः ।३।

अनि ब्रह्मचारीहरूले सोधे : कुश्जपले अमृतत्त्व मिल्छ भन्नोस् ? याज्ञवल्क्यले भने : शतरुद्रिय जपपाठले अमृतत्त्व मिल्छ ।

*

**चतुर्थः खण्डः**

अथ ह जनको ह वैदेहो याज्ञवल्क्यमुपसमेत्योवाच 'भगवन् सन्न्यास-मनुब्रूहीति । स होवाच याज्ञवल्क्यो ब्रह्मचर्यं समाप्य गृही भवेत्, गृही भूत्वा वनी भवेत्, वनी भूत्वा प्रव्रजेत् । यदि वेतरथा ब्रह्मचर्यादेव प्रव्रजेद्गृहाद्वा वनाद्वा । अथ पुनरव्रती वा ब्रती वा स्नातको वाऽस्नातको वा उत्सन्नाग्निरनग्निको वा यदहरेव विरजेत्तदरेव प्रव्रजेत् । अग्निर्ह वै प्राणः प्राणमेवैतया करोति पश्चात्रै-धातवीयामेव कुर्यात् । एतयैव त्रयो धातयो यदुत सत्त्वंरजस्तम इति । अयं ते योनिर्ऋत्वियो यतो जातो अरोचथाः । तं जानन्नग्न आरोहाथा नो वर्धय रयिम् इत्यनेन मन्त्रेणाग्निमाजघ्रेत् । एष वा अग्नेर्योनिर्यः प्राणः प्राणं गच्छ स्वाहेत्येव-मेवैतदाह । आपो वै सर्वा देवताः । ॐ सर्वाभ्यो देवताभ्यो जुहोमि स्वाहेति हुत्वा समुद्धृत्य प्राश्नीयात्साज्यं हविरनामयं मोक्षमन्त्रस्त्रय्येवं विन्देत् । तब्रह्मेतदुपासि-तव्यम् । एवमेवैतद्भगवन्निति वै याज्ञवल्क्यः ।४।

*

अनि विदेहराज जनक उनका अगाडि आएर बोले- 'भगवन्, सन्न्यास बताइदिनोस् !' अनि ती याज्ञवल्क्य बोले- 'ब्रह्मचर्य आश्रम पूरा गरेपछि गार्हस्थ्य आश्रमवाला होला । गृहस्थ सकिएपछि वनी अर्थात् वानप्रस्थी बनोस् ! बनी भइसकेपछि मात्र प्रव्रज्या (सन्न्यास) लेओस् ! यदि यसको (क्रमको) आवश्यक छैन भने ब्रह्मचर्यबाटै वा गार्हस्थ्य वा वनबाट प्रब्रजन गरे पनि हुन्छ । अफ खास कुरा के भने- ब्रती, अब्रती, स्नातक, अस्नातक, साग्निक जे भए पनि जुनसुकै दिन वा रातमा प्रव्रज्या लिन सकिन्छ, कारण वैराग्य लाग्नु आवश्यक छ । त्यसमा चाहिँ खास गरी एक थरी प्राजापत्य अग्नि सकार्छन् । त्यसै गर्नु पनि कर छैन, आग्नेयी कर्म मात्र गरोस्, भइहाल्छ । अग्नि चाहिँ निश्चय नै प्राण हो र प्राणलाई सकार्नै पर्छ । त्रैधातवीय गरोस् । यी तीन धातु भन्नु सत्व-रज-तम भनिएको हो । यो त निर्ऋत्विज हो, किनकि त्यसरी विराग उब्जँदा प्राण रुचिमय हुन्न र प्राणलाई रुचिकर तुल्याउन अग्नि चढाउनै योग्य ठहर्छ, कारण सन्न्यासमा अन्न जल बढाउनु चाहिँ हुन्न । यहीं 'अयं ते यो निर्ऋत्विजो यतः ? '........' भनिने मन्त्रले अग्नि सङ्ग्रह गरोस् र 'एष ह वा अग्नेर्योनिर्य प्राणः प्राणंगच्छ स्वाहा' भन्दै अग्निक्रिया (होम) गरोस् ।

जो, यस खालले अग्नि पाइएन भने जलमा हवन गरोस् ! ' आपो वै सर्वा देवताः सर्वाभ्यो देवताभ्यो जुहोमि स्वाहा' यति भन्दै होमेर, उतारेर प्रसाद ग्रहण गरोस् ! किनभने त्यस्तो घिउ अन्न (हव्य) अनामय हुन्छ, मोक्षमन्त्र हुन्छ, वेदमा यसै भनिएको छ । यो नै ब्रह्म हो, तसर्थ यसरी उपासना गर्नै गर्छ । यसैले नै यति भन्दछु भगवन् !' भनी याज्ञवल्क्य अडे ।

**पञ्चमः खण्डः**

अथ हैनमत्रिः पप्रच्छ । याज्ञवक्य पृच्छामि त्वा याज्ञवल्क्य अयज्ञोपवीति कथं ब्राह्मण इति । स होवाच याज्ञवल्क्य इदमेवास्य तद्यज्ञोपवीतं य आत्मा प्राश्याचम्यायं विधिः परिव्राजकानाम् । वीराध्वाने वाऽनाशके वाऽपां प्रवेशे वाऽग्निपवेशे वा महाप्रस्थाने वाऽथ परिव्राड् विवर्णवासा मुण्डोऽपरिग्रहः शुचिरद्रोही भैक्षाणो ब्रह्मभूयाय भवति । यद्यातुरः स्यान्मनसा वाचा वा सन्न्यसेत् । एष पन्था ब्रह्मणा ह्यनुवित्तस्तेनैति सन्न्यासी ब्रह्म विदित्येवमेवैष भगवन्निति वै याज्ञवल्क्यः ।५।

*

त्यसपछि अनि अत्रिले सोधे- 'म याज्ञवल्क्यसँग सोध्दछु, तपाईं हे याज्ञवल्क्य, अयज्ञोपवीती (जनैहीन) कसरी ब्राह्मण हुन्छ भन्नुहुन्छ हँ' ? अनि उनले भने- 'यही नै यस्ता सन्न्यासीहरूको जनै हो अर्थात् आत्मैदेखि शुद्ध बनेर आत्मैले मन्त्रपूत पानी पिई अचाउँछ भने परिव्राजकविधि पूर्ण गरेको मान्नुपर्छ । सन्न्यास-विधि यही त हो नि वीरमार्गमा (बाघ, सर्प आदिसँग संघर्ष गर्नुपर्दा), उपवास गर्दा, जलमार्गमा, अग्निमार्गमा र महाप्रस्थानमा समेत । अनि त्यो परिब्राट् (सन्न्यासी गेरुवस्त्र, मुण्डा टाउको, खालीहात, लोभरहित, शुद्धजीउ, रिसरागहीन भिक्षाको जीवन राख्छ भने ब्रह्मभू नै हुन्छ, यति निश्चित छ । यदि आतुर (अशक्त) छ भने त मन र वचनले मात्र यी कर्म (विधि) गरे हुन्छ, पुग्छ । यो पन्था त ब्रह्माले नै स्वीकारिएको हुनाले यसरी चल्ने सन्न्यासी ब्रह्मवित् हो । म (याज्ञवल्क्य) पनि यस पथको यिनै कृत्यलाई स्विकार्दछु भगवन् !'

**षष्ठः खण्डः**

तत्र परमहंसा नाम संवर्तकारुणिश्वेतकेदुर्वासऋभुनिदाघजडभरत-दत्तात्रेयरैवतकप्रभृतयोऽव्यक्तलिङ्गा अव्यक्ताचारा अनुन्मत्ता उन्मत्तवदाचरन्तस्त्रि-दण्डं कमण्डलुं शिक्यं पात्रं जलपवित्रं शिखां यज्ञोपवीतं चेत्येतत्सर्वं भूः स्वाहेत्यप्सु परित्यज्यात्मानमन्विच्छेत् । यथा जातरूपधरो निर्द्वन्द्वो निष्परिग्रह-स्तत्तत्वब्रह्ममार्गे सम्यक्सम्पन्नः शुद्धमानसः प्राणसन्धारणार्थं यथोक्तकाले विमुक्तो भैक्षमाचरन्नुदरपात्रेण लाभालाभौ समौ भूत्वा शून्यागारदेवगृहतृणकूटवल्मीकवृक्षमूलकुलाल-शालाग्निहोत्रनदीपुलिनगिरिकुहकन्दरकोटरनिर्झरस्थण्डिलेष्वनिकेतवास्यप्रयत्नो निर्ममः शुक्लध्यानपरायणोऽध्यात्मनिष्ठोऽ-शुभकर्मनिर्मूलनपरः सन्न्यागं सेनदेहत्यागं करोति स परमहंसो नाम स परमहंसो नामेति ।६।

*

त्यस्तै, यस विषयका परमहंसहरू जस्तै- संवर्तक, आरुणि, श्वेतकेतु, दुर्वासा, ऋभु, निदाघ, जडभरत, दत्तात्रेय, रैवतक आदि अव्यक्तलिङ्गीहरू अव्यक्ताचारीहरू उन्मत्तकै झैं व्यवहार गर्नेहरूले त्रिदण्ड-कमण्डलु-दहीठेको (दही खाने खपटो) -करपात्र-जलपात्र-पवित्र-शिखा-जनैसमेत सब थोकलाई 'एतत्सर्वं भूः स्वाहा' भन्दै पानीमा सेलाइदिएर आत्मानन्द लेओस् ! जस्तो बन्दो रूप होस्‌न त्यसपछि, त्यस्तै रूप लिई गाँठो अड्को नलिई, साथीसँगाती नराखी आफू अनुसार मिल्दो ब्रह्ममार्गमा राम्रै गरी पुगेर मन शुद्ध राख्दै प्राणमात्र बचाउन उचित अवसरमा मात्र भिक्षा निस्पृह रूपले (ढङ्गले) गर्दै उदरपात्रद्वारा फाइदा-बेफाइदामा लाभालाभमा उस्तै रही निर्जरघर-मंदिर-छाप्रो-कूटी-थुम्को-रूखको फेद-कुमालेको चक्रघर-अग्निहोत्र हुने घर-नदी-बगर-पर्वत-गुफा-सुरुङ-टोडको-झरना-रित्तो भुईं आदिमा घरबार नगर्ने (अस्थायी र अस्थिर) रूपले वास गरी ममता नराखी सेतो सफा तत्वमाथि ध्यान स्थिर तुल्याएर, अध्यात्मशील भईं, अशुभ कर्मको जरै उखेल्ने बन्दै सन्न्यासद्वारा देहत्याग गर्दछ भने त्यो परमहंस नामको हो, त्यही परमहंस हो ! ॐ पूर्णमदः शान्तिः ! शान्तिः !!

# समय व्यवस्थापन तथा हाम्रो स्वास्थ्य







डा. कमल शर्मा लम्साल

मानव जीवनमा समयको धेरै महत्व हुन्छ। उचित समयमै सम्पादन गरेको कार्य तथा लिइएको निर्णयले उद्देश्य प्राप्ति सहज हुन्छ। समय फर्केर आउँदैन र यो दुर्लभ स्रोत पनि हो। यसको भरपूर सदुपयोग गर्नु पर्दछ। यसको उचित व्यवस्थापनले थोरै तथा निश्चित समयमा बढी उपलब्धि प्राप्त गर्न सकिन्छ। कुशल व्यवस्थापकहरूले उनीहरूको दस प्रतिशत समयमा नब्बे प्रतिशत नतिजा प्राप्त गर्न सक्छन्। समय नै धन हो तथा स्वास्थ्य पनि हो।

व्यस्त दैनिकी समयको उचित व्यवस्थापन हुन नसक्दा स्वास्थ्यमा पनि नकारात्मक असर पर्दछ, जसलाई समयको तनाव अथवा Time Stress भनिन्छ। हरेक पेसामा जति जिम्मेवारी बढ्दै जान्छ, समयको तनाव उति नै बढ्न सक्छ। निश्चित अवधिमा कहीं पुगिसक्नुपर्ने, केही काम गरिसक्नुपर्ने, कसैलाई भेटिसक्नुपर्ने जस्ता अवस्थाहरू हाम्रो जीवनका पलपलमा जोडिएका हुन्छन्। नियमित काम तोकिएको समयमा गर्न नसक्दा तथा कामको भार बढी हुँदा समयको दवाव महसुस हुन्छ। स्वतःस्फूर्त काम नभएपछि आफूभन्दा माथिको निकायले ताकेता गरिरहनुपर्दा तनाव झन् बढ्दछ।

जब समयको तनाव तथा दबाव बढेर जान्छ, त्यसले शारीरिक तथा मानसिक रूपमा रोगी बनाउँछ। शरीरमा एड्रेनलिन तथा कार्टिसोल जस्ता हार्मोनहरूको उत्पादन बढी हुन्छ। मुटुको चाल बढ्ने, रक्तचाप बढ्ने, रगतमा ग्लुकोजको मात्रा बढ्ने लगायत दीर्घकालीन तनावले गर्दा चुरोट रक्सी तथा लागूपदार्थको कुलतमा फस्ने सम्भावना उत्तिकै हुन्छ। साथै व्यस्तताको कारणले शारीरिक व्यायाम नगर्ने/काम गर्ने, राम्ररी ननिदाउनेजस्ता अवस्थाहरूले मुटु तथा अन्य रोगको जोखिम बढेर जान्छ। तनावले प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा हृदयघात, पक्षघातको सम्भावना समेत बढाउँछ। अत्यधिक तनावका अन्य लक्षणहरूमा चक्कर लाग्ने, हात काम्ने, पसिना बढी आउने, टाउको दुख्ने, शरीर कमजोर तथा शिथिल हुने, रिस उठ्ने, क्रोधित हुने, चिन्ता बढी गर्ने, समयमा निर्णय गर्न नसक्ने, कुराहरू बिर्सिने, हिनताबोध हुने आदि हुन्।

**समय व्यवस्थापन गर्ने तरिकाहरु**

- आफ्ना रूचि तथा क्षमताअनुसारको काम वा पेशा गर्ने।
- नसक्ने र अनावश्यक काममा नभुल्ने। नसकिने आश्वासनहरू नदिने।
- काममा निश्चित उद्देश्यहरू समावेश गर्ने। असिमित, अनियन्त्रित तरिकाले काम नगर्ने।
- काममा प्राथमिकता निर्धारण गर्ने। कुन काम कहिले तथा त्यसका लागि कति समय चाहिने हो पहिले नै यकिन गर्ने।
- हरेक दिनको कामको कार्ययोजना बनाउने तथा सूचीकृत गर्ने र भए नभएको पुनरावलोकन गर्ने।
- समय खेर जान नदिनका लागि पूर्वतयारीहरू गर्ने तथा सावधानीहरू अपनाउने। जस्तै : तयारी विनाका बैठकहरू नराख्ने जरूरी नभएका टेलिफोन कल नउठाउने र लामो कुरा नगर्ने, सरोकार नभएका व्यक्तिहरूलाई नभेट्ने आदि।
- घर तथा कार्यालयमा उचित तरिकाले कार्य विभाजन गर्ने तथा सहयोगीहरूलाई चुस्त तरिकाले परिचालन गर्ने।
- आधुनिक सूचना प्रविधिको बढी प्रयोग गर्ने।
- सम्भव भएसम्म कार्यालयको काम घरमा नलग्ने। हरेक दिन आराम गर्ने, व्यायाम गर्ने तथा हप्ताको केही समय मनोरञ्जनको लागि समय निकाल्ने।
- सुत्ने तथा उठ्ने नियमित समय बनाउने।
- शयन कोठामा टिभी, कम्प्युटर आदि नराख्ने ताकि अन्य कामले गर्दा निद्रा कम नहोस्। सुत्न गइसकेपछि स्मार्ट फोन वा अन्य ग्याजेटहरू पनि नचलाउने।

यसका साथै कुन कामलाई कति समय दिने भन्ने कुरा पनि महत्वपूर्ण हुन्छ। यसको उदाहरण हामी हाम्रो सडकमा देख्न सक्छौं।

हामी घण्टौं गफ गरेर बस्न सक्छौं, लामो समयसम्म टि.भी. हेर्न सक्छौं, तथा फेसबुक लगायतका सामाजिक सञ्जालमा लामो समय भुल्न सक्छौं तर सडकमा मोटरसाइकल वा गाडी चलाउदा तीव्र गतिमा तथा ओभरटेक गर्दै हुइँकन खोज्छौं मानौं कि केही मिनेट पनि ढिला हुनुहुँदैन। त्यसैले पैदल यात्रा गरी बाटो काट्दा नजिकै आएको सवारीसाधनको गति ख्याल नगरी आफ्नै हातमा ब्रेक भए जसरी हात हल्लाउँदै सडकको पारी पुग्न हतारिन्छौं।

यसो गर्दा आफूलाई मात्र नभई सडकमा अरूलाई समेत तनाव हुन्छ एवं दुर्घटना हुन सक्छ। हरेक दिनको कुरा हुनाले सवारी तथा यात्राको लागि यथेष्ट समय छुट्टयाएर हिंड्नुपर्दछ। हतार मात्र गर्नु हुँदैन।

तसर्थ, हाम्रा दैनिक जीवनमा यिनै सानासाना कुराहरूलाई व्यवहारमा उतार्न सकियो भने तनावरहित तरिकाले स्वस्थ जीवन बिताउनका लागि केही सहयोग हुन सक्छ।

# अग्निचक्रको इतिहास, वर्तमान र भविष्य



प्रा. शिवगोपाल रिसाल

आरम्भ नै इतिहास बन्दोरहेछ । तर शुभारम्भ होस् । श्रीपरब्रह्म परमात्मालाई सम्झेर गरिएको कुनै कर्म पनि शुभ नै हुन्छ र त्यसले भविष्यमा गएर मीठो इतिहास बनाउँदो रहेछ । इतिहास बनाउन खोजेर बन्दैन । निरन्तर लागिरह्यो भने राम्रो इतिहास बन्दछ, भित्र सद्भाव, सत्यसङ्कल्प छ भने ।

मान्छेको, राजामहाराजाको, राजनीतिको, देशको, साहित्यको सबको इतिहास हुन्छ । यस्तो भएको थियो भनेर विगतका, भूतका वर्णनै त इतिहास हो नि । त्यस्तै पत्र-पत्रिकाको पनि इतिहास हुन्छ । कुनै खास कालखण्ड बिताएपछि इतिहास बन्यो, बनाइयो । इतिहास त एउटा घटना त हो नि । शुभ-सङ्कल्प, शिव-सङ्कल्प, सत्य-सङ्कल्प लिएर पवित्रात्माले, पवित्र समयमा, पवित्र स्थानमा, पवित्र उद्देश्य लिएर आरम्भ गरिएको छ भने राम्रो इतिहास बन्छ, सबैको कल्याण गरेर ।

पुराणहरू, महाभारत, रामायण आदि पनि धार्मिक, पौराणिक इतिहास नै हुन् । यी सारामा परमात्माको प्रवेश छ, सत्य सङ्कल्प छ, शिवभाव छ । त्यसैले यो कालजयी बन्यो । वैदिक-सनातन-धर्मको प्रमाणिक ग्रन्थ पनि । वैदिक साहित्यको पनि इतिहास छ- शाश्वत, सनातन । मानव सभ्यताको एउटा जीवन्त इतिहास ।

यस्तै-यस्तै कालक्रम अनुसार नेपाली साहित्य, संस्कृति र धार्मिक धरातलमा 'अग्निचक्र' ले पनि आफ्नो इतिहासको शुभारम्भ गरेको छ- एक शुभ-प्रभातमा । इतिहास उज्यालो छ भने वर्तमान पनि उज्यालै हुन्छ अनि भविष्य उज्यालो हुने कुरामा शङ्कै छैन । उद्देश्य पवित्र हुनुपर्छ, वातावरण अनुकुल बन्छ ।

त्यसबेलाको वर्तमान आज त इतिहास वा भूत भइसकेछ । आजको वर्तमान नै हिजोको भविष्यत् हो भनेको भोलिको भूत । अतः हामी वर्तमानमा बाँचिरहेका छौं । हाम्रो भूत पनि छैन, भविष्यत् पनि छैन । वर्तमान हाम्रो हातमा छ । विगत बितिसक्यो, अनागत आएकै छ । त्यसैले होला लियो टल्सटाईले भने-

Present Time is the Most Important Time (वर्तमान काल नै सबभन्दा महत्वपूर्ण समय हो ।)

हाम्रा अवधूत शिरोमणि दत्तात्रेय महामुनि आफ्नो 'अवधूत' को प्रत्येक अक्षरको अर्थ गर्ने क्रममा 'व' को अर्थ यसरी गर्नुहुन्छ-

**वासना वर्जिता येनवक्तण्यं र निरामयम ।**
**वर्तमानेषु वर्तेत 'व' कार स्तस्य लक्षणम् ॥**

जसको वासना पटक्कै छैन, जो निरामय छ । जो केवल वर्तमानमा वर्तन गरिरहेको, बाँचिरहेको, आनन्दपूर्वक रमाइरहेको छ । 'व' कारको लक्षण, 'व' कारको अर्थ यही हो ।

वर्तमान हाम्रो सर्वस्व हो । अमृतबेला यही नै हो । हामीले गर्ने वर्तमानमा नै हो । बनाउने वर्तमानलाई नै हो । वर्तमान बने भूत बन्छ, भविष्यत बन्नेछ ।

तपाईको हिजो नै तपाईको आज हो । तपाईको आज नै तपाईको भोलि । तपाईले भनेको हिजो नै हिजो त आज थियो नि । आजको आज नै भोलि हिजो हुने त हो नि । यी सारा कारण र अनुभवले के कुरो स्पष्ट हुन्छ भने सारा हो वर्तमान । भूत पनि छैन- गइसकेको हुनाले, वर्तमानकै बाटोबाट गएको हुनाले । भविष्यत् पनि छैन- आइनसकेको हुनाले वर्तमानकै बाटो जाने हुनाले ।

तपाई वर्तमान हो, वर्तमानमात्र नितान्त वर्तमान । हामी वर्तमानमा जन्मन्छौं । वर्तमानमा हुर्कन्छौं र अज्ञानी भए वर्तमानमा नै मर्दछौं । यसर्थ हामी सबैले वर्तमानलाई अमृतमय, ज्योतिर्मय, सत्मय अर्थात् सच्चिदानन्दमय बनाउनु नै हाम्रो परम पुरूषार्थ हो ।

यही दर्शन र सिद्धान्तका धरातमा उभिएर, टेकेर मैले 'अग्निचक्र' लाई हेरेको छु ।

यस धराधाममा अवतरित भएका समयमा लभश्री राष्ट्रिय मासिक लगातार ८ अंक प्रकाशित भएपछि यसका संस्थापक/प्रकाशक/सम्पादक लक्ष्मीनारायण जीले नाम परिवर्तन गरी अग्निचक्र राष्ट्रिय मासिक नामबाट लगातार सुचारू गर्नु भयो र आज हामी **अग्निचक्र**ले यसलाई चिन्दछौं ।

नाम अनौठो खालको छ । सुनेको हो- यो नाम तान्त्रिक रे । हुन त हामीले जानेको शरीरका षट्चक्रमध्ये यो कुन चन्द्रसँग मिल्दछ, थाहा छैन ।

मूलधार, माणिपुर, अनाहत, विशुद्ध, आज्ञा र सहस्रार चक्रमा यसको कहाँनेर स्थान छ थाहा भएन । जे होस् यसका जन्मदाताले स्पष्ट पार्लान् ।

यो मासिक पत्रिका हो । वि.सं. २०६६ सालमा जन्मेर यसले २०७६ असारमा दश वर्ष पार गरेछ । नियमित रूपमा प्रकाशित भएर आफूलाई दश वर्षसम्म अक्षुण राख्न सक्नु यसको विशेषता नै हो ।

यो साहित्यिक, आध्यात्मिक, सामाजिक, सांस्कृतिक र राजनैतिक पनि पत्रिका हो । यसरी यी सबै क्षेत्रका जिज्ञासु, ज्ञानपिपासु, पाठकहरूलाई सम-सामयिक खुराक पस्केर अविस्मरणीय गुन लगाएको छ ।

प्रसिद्ध साहित्यकार, प्रसिद्ध धार्मिक/दार्शनिक, प्रसिद्ध सामाजिक र प्रसिद्ध राजनैतिक व्यक्तिहरूलाई यसले आफ्ना छातीभरी अङ्कित गरेर सबैका समक्ष चिनाएको छ । यसका सम्पादक एवं प्रकाशक युवा साधक, तपस्वी श्रीलक्ष्मीनारायण भट्टराईको त्याग र तपस्याले जीवन्तरूप प्रदर्शन गरेको छ र 'अग्निचक्र' ले आफ्नो मौलिक वर्चस्व कायम गरेको छ । अग्निचक्रका सल्लाहकार लगायत यसका सम्पूर्ण परिवार नै धन्यवादका पात्र छन् ।

'अग्निचक्र' ले यस कालखण्डमा, यस क्षेत्रमा एउटा अविस्मणीय इतिहास बनाएको छ । किनभने यसको वर्तमान अत्यन्त सफल र सुशोभित थियो । अब यसको भविष्य पनि अत्यन्त उज्यालो हुनेछ भनी हामी भविष्यवाणी गर्न सक्तछौं । गन्धा राजनीतिले यसलाई किन्ने चेष्टा गरेन र यसले बिक्ने दुस्साहस गरेन भने यसलाई जनता-जनार्दनले नै अझ आलोकित, अझ समुज्ज्वलित बनाउने छ । किनभने यसका साथमा जनता-जनार्दन छन् । अब यो एक्लो छैन । एउटा संस्था नै बनिसकेको छ ।

अग्निचक्र अझ धार्मिक, अझ नैतिक, अझ दार्शनिक र आध्यात्मिक बनोस् । र जनता जनार्दनको आध्यात्मिक सेवा गरोस् । यसको भविष्य अझ उज्यालो र लोकप्रियमात्र होइन, लोककल्याणकारी समेत बनोस् । यही शुभकामना र शुभआशीर्वाद ।

शिव-मस्तु । ॐ ॥